# वार्षिक कार्यक्रम कार्यान्वयन कार्यविधि

२०७६

प्रदेश सरकार

प्रदेश नं. ५

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय

बुटवल, नेपाल

प्रदेश सरकार
प्रदेश नं. ५
उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
बुटवल, रुपन्देही

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय प्रदेश नं.५ बुटवलको मिति २०७६।४।२९ गतेको निर्णय (मा. मन्त्रिस्तर) बाट स्वीकृत भएको वार्षिक कार्यक्रम कार्यान्वयन कार्यविधि २०७६।

सही
०७६।४।२९
विजयराज सुवेदी
उपसचिव (नवौं)

# बिषय-सूचि

बिषय | पेज नं


परिच्छेद १ ................................................................

परिचय ................................................................ १

१.१ पृष्ठभूमि ................................................................ १

१.२ परिभाषा ................................................................ १

१.३ कार्यक्रम संचालन प्रक्रिया ................................................................ १

१.४ कार्यक्रम कार्यान्वयन विधि ................................................................ १

१.५ कार्यक्रमको अनुगमन तथा मूल्याङ्कन विधि ................................................................ २

परिच्छेद २ ................................................................ ३

वन, वन्यजन्तु, जैविक विविधता संरक्षण तथा ब्यवस्थापन कार्यक्रम (३०७०००१२) ................................................................ ४

२.१ वन, वन्यजन्तु, वातावरण, जैविक विविधता सम्बन्धी कानून निर्माण ................................................................ ४

२.२ सिमसार क्षेत्र संरक्षण पोखरी निर्माण कार्यक्रम ................................................................ ४

२.३ सडक सौन्दर्यीकरण कार्यक्रम ................................................................ ४

२.४ वनमा आधारित उत्पादन कार्यक्रम (ढलापडा काठदाउरा संकलन समेत) ................................................................ ५

२.५ जैविक विविधता संरक्षण र प्रवर्द्धन कार्यक्रम (सूचना केन्द्र स्थापना, अभिलेखीकरण आदि) ................................................................ ५

२.६ वृक्षारोपण कार्यक्रम (विरूवा उत्पादन, नर्सरी निर्माण, मर्मत, वृक्षारोपण, निजी तथा कृषि वन आदि) ................................................................ ६

२.६.१ नर्सरी निर्माण / मर्मत ................................................................ ६

२.६.२ विरूवा उत्पादन ................................................................ ६

२.६.३ वृक्षारोपण ................................................................ ६

२.६.४ निजी तथा कृषि वन प्रवर्द्धन ................................................................ ७

२.७ खाता जैविक मार्गमा वन्यजन्तु ओहोर दोहोर गर्ने सुरुङपुल निर्माण (Under pass / Over pass bridge) का लागि विस्तृत योजना प्रतिवेदन तयार गर्ने ................................................................ ७

२.८ वनको वैज्ञानिक, व्यवसायिक र दिगो व्यबस्थापन ................................................................ ७

२.८.१ सामुदायिक वन व्यवस्थापन ................................................................ ७

२.८.२ साझेदारी वन व्यबस्थापन ................................................................ ८

२.८.३ चक्ला वन व्यवस्थापन ................................................................ ८

२.९ वन व्यवस्थापन (समुदायमा आधारित वन, राष्ट्रिय वन लगायतको कार्ययोजना निर्माण, पुनरावलोकन, अनुगमन आदि) ................ ९

२.१० वन संरक्षण (वन अतिक्रमण, वन अपराध नियन्त्रण, वन डढेलो रोकथाम तथा नियन्त्रण, चोरी निकासी नियन्त्रण, वन्यजन्तु संरक्षण आदी) ................................................................ ९

२.११ विभिन्न दिवस, समारोह, प्रचार प्रसार आदि ................................................................ १०

२.१२ वन अनुसन्धान तथा प्रशिक्षण ................................................................ १०

२.१२.१ वन जडिबुटी तथा गैरकाष्ठ वन पैदावार, लोकल भोल्यूम टेबल सम्बन्धी अध्ययन गर्ने (अन्य अनुसन्धान) ................ १०

२.१२.२ कर्मचारी सीप विकास तथा क्षमता अभिबृद्धी तालिम (वैज्ञानिक वन व्यवस्थापन, वन श्रोत सर्वेक्षण) ................ १०

२.१३ मानव वन्यजन्तु द्वन्द्व व्यबस्थापन कार्यक्रम ................................................................ ११

२.१४ वन अनुसन्धानका लागि आवश्यक पर्ने उपकरण, मेसिन खरिद ................................................................ ११

परिच्छेद ३ ................................................................ १२

जडिबुटी तथा गैह्रकाष्ठ वन पैदावार विकास कार्यक्रम (३०७०००१४) ................................................................ १२

३.१ जडीबुटी तथा गैरकाष्ठ वनपैदावार संरक्षण, व्यबस्थापन, व्यवसायीकरण संबन्धी कृयाकलाप ................................................................ १२

३.२ जडीबुटी तथा गैरकाष्ठ वन पैदावार प्रवर्धन, उद्यम विकास ................................................................ १२

३.३ जडीवुटी तथा गैरकाष्ठ वन पैदावार व्यवस्थापन सम्वन्धि प्रशिक्षण, स्रोत सर्वेक्षण, उत्पादित वस्तुहरूको वजारीकरण, मुल्य अभिवृद्धी सम्वन्धि क्रियाकलाप (प्रशिक्षण)....................१३
परिच्छेद ४ ....................१४
भू तथा जलाधार व्यबस्थापन कार्यक्रम (३०७०००१५) ....................१४
४.१ कार्यनीति ....................१४
४.२ खरीद र भुक्तानी प्रकृया तथा गुणस्तर नियंत्रण ....................१५
४.३ कार्यान्वयन विधि....................१५
४.३.१ आकस्मिक पहिरो व्यवस्थापन तथा नदी खोला नियन्त्रण ....................१५
४.३.२ ग्रामिण सडकसँग भूसंरक्षण कार्यक्रम....................१६
४.३.३ नदी तथा खोला किनार व्यवस्थापन ....................१६
४.३.४ संवेदनशिल जलाधार क्षेत्र संरक्षण ....................१७
४.३.५ कृषि वन प्रणालीका लागि डालेघाँस, फलफूलका विरुवा वितरण....................१८
४.३.६ पानी मुहान संरक्षण / पोखरी निर्माण कार्यक्रम ....................१८
४.३.७ गल्छी, पहिरो तथा खहरे रोकथाम ....................१९
४.३.८ भू तथा जलाधार संरक्षण संबन्धी कार्यक्रम ....................१९
परिच्छेद ५ ....................२१
पर्यटन विकास तथा प्रवर्द्धन कार्यक्रम (३०७०००१३) ....................२१
५.१ सीप विकास तथा जनचेतना तालिम तथा गोष्ठी सम्बन्धी खर्च....................२१
५.२ कार्यक्रम खर्च....................२२
५.२.१ प्रादेशिक पर्यटन सम्बन्धी कानून निर्माण....................२२
५.२.२ पर्यटकीय सेवा दर्ता नवीकरण ....................२२
५.२.३ प्रचार/प्रसार कार्यक्रम ....................२२
५.३ सार्वजनिक निर्माण पूँजीगत खर्च....................२३
५.३.१ ऐतिहासिक तथा धार्मिक मन्दिर/मस्जिद/आश्रमहरु संरक्षण एवम् धार्मिक पर्यटन पूर्वाधार विकास....................२३
५.३.२ संग्रहालय निर्माण कार्यक्रम ....................२५
५.३.३ तालगुफा/पोखरी/झरना/ सिमसार क्षेत्र संरक्षण, पर्यटन विकास र प्रवर्द्धन....................२५
५.३.४ होमस्टे संचालन विकास र प्रचार प्रसार....................२७
५.३.५ पर्यटकीय सूचना केन्द्र निर्माण र व्यवस्थापन....................२७
५.३.६ उद्यान/पार्क/ गार्डेन निर्माण विकास र प्रवर्द्धन ....................२७
५.३.७ भ्यूटावर निर्माण र मर्मत संभार ....................२९
५.३.८ पदमार्ग निर्माण, स्तरोन्नति तथा मर्मत र सुधार....................३०
५.३.९ पर्यटकीय पूर्वाधार विकास र संरक्षणका कार्यक्रमहरु....................३१
५.३.१० सांस्कृतिक डबली निर्माण....................३२
५.४ पूँजीगत अनुसन्धान(पुंजीगत खर्च) ....................३२
५.५ लुम्बिनी भ्रमण वर्ष २०७६ कार्यक्रम....................३३
५.६ नेपाल भ्रमण वर्ष, २०२० को जिल्ला स्तरीय समिति गठन तथा पर्यटन प्रवर्द्धन कार्यक्रम....................३३
परिच्छेद ६ ....................३४
वाणिज्य तथा आपूर्ति व्यवस्थापन कार्यक्रम (३०७०००१६)....................३४
६.१ खाद्य वस्तुको गुणस्तर मापन प्रयोगशाला स्थापना )बहुवर्षिय कार्यक्रम(....................३४
६.२ खाद्यान्न भण्डारण सम्भाव्यता अध्ययन) रुकुम र रोल्पा( ....................३४
६.३ आन्तरिक उत्पादनको मेला प्रदर्शनी ....................३४

६.४ वाणिज्य/ बजार अनुगमन निरीक्षण ...... ३४
६.५ उद्योग तथा वाणिज्य फर्महरुको तथ्याङ्कहरुको अपडेट ...... ३५
६.६ उपभोक्ता जागरण अभियान सञ्चालन ...... ३५
६.७ उद्योग तथा बाणिज्य प्रशासन ...... ३५
६.८ सहकारी मार्फत सुपथ मूल्य पसल सञ्चालन कार्यविधि तयारी तथा सहयोग ...... ३५
६.९ वाणिज्य तथा आपूर्ति सम्बन्धी कानूनको निर्माण ...... ३५
६.१० उपभोक्ता दिवस ...... ३६
६.११ प्रदेशमा सञ्चालनमा रहेका पेट्रोल पम्पहरुको स्तरोन्नती गर्न मापदण्ड तयारी गरी अनुगमन तथा निरिक्षण गर्ने ...... ३६
**परिच्छेद ७** ...... ३७
**औद्योगिक विकास तथा प्रवर्द्धन कार्यक्रम (३०७०००१७)** ...... ३७
७.१ औधोगिक तथ्याङ्क अपडेट ( Up-date ) राख्नका लागि र उद्योग दर्ताका लागि सफ्टवेयर निर्माण ...... ३७
७.२ विपन्नमुखी आयमूलक सीप विकास तालिम ...... ३७
७.३ मुक्त कमैया, कम्लरी, माझी, कुमाल, हलिया तथा लोपन्मुख , सिमान्तकृतहरुलाई सीप मूलक तालिम ...... ३८
७.४ सीप विकास तथा रोजगार कार्यक्रम भिन्न क्षमता, एकल महिला, दलित तथा जनजाती ...... ३८
७.५ जिल्ला स्तरमा लघु , घरेलु तथा साना उद्यमीहरुलाई प्रविधि हस्तान्तरण ...... ३९
७.६ उद्योग दिवस मनाउने ...... ३९
७.७ औद्योगिक अवलोकन भ्रमण ...... ४०
७.८ उद्यमीहरुको समस्या र समाधान विषयक अन्तरकृर्या कार्यक्रम ...... ४०
७.९ भगत सर्वजित परम्परागत शील्प व्यवसाय प्रवर्द्धन तालिमः ...... ४१
७.१० ब्यवस्थापन सचेतना तथा सुधार तालिम ...... ४१
७.११ ग्रामिण उद्यमशिलता प्रबर्धन तालिम ...... ४२
७.१२ उद्यमशिलता विकास प्रशिक्षक प्रशिक्षण तालिम ...... ४३
७.१३ उद्यमी भेला तथा परामर्श कार्यक्रम ...... ४३
७.१४ प्रविधि हस्तान्तरण तथा स्तरोन्नती तालिम ...... ४४
७.१५ उद्यम संचालन, ब्यवसायिक योजना निर्माण तथा ब्यवस्थापन सम्बन्धी तालिम ...... ४४
७.१६ वुद्धकालिन र वुद्धसंस्कृतिमा आधारित काष्ठकला ,ललितकला र मुर्तिकला सम्बन्धी कलाकार उत्पादन गर्ने ...... ४५
७.१७ ऐन, नीति , नियमावली , कार्यविधि तथा निर्देशिका निर्माण तथा परिमार्जन ...... ४६
७.१८ प्रादेशिक गरिवी निवारणका लागि लघु उद्यम विकास संचालन निर्देशिका निर्माणः ...... ४६
७.१९ प्रदेश मेडपा निर्देशक समितिको बैठक संचालन ...... ४७
७.२० मेडपा संचालनको लागि सेवा प्रदायक संस्थाहरुको छनौट कार्य संचालन ...... ४७
७.२१ सरोकारवाला संग अन्तरक्रिया कार्यक्रम ...... ४७
७.२२ तालिम पछिको अनुगमन तथा परामर्श सेवा ...... ४८
७.२३ वार्षिक तथा अर्धवार्षिक योजना तर्जुमा तथा प्रगति समीक्षा गोष्ठी ...... ४८
७.२४ प्रदेशमा संचालनमा रहेका उद्योगहरुको निरीक्षण र अनुगमन ...... ४९
७.२५ उद्यम विकास कोष स्थापना ...... ४९
७.२६ आवश्यकताको आधारमा GESIMIS सम्बन्धी क्षमता अभिवृद्धि कार्यक्रम संचालन गर्ने ...... ५०
७.२७ उद्यमीहरुको समस्या र समाधान विषयक अन्तरक्रिया कार्यक्रम ...... ५०
७.२८ तालिम कार्यविधि निर्माण ...... ५०
७.२९ आन्तरिक उत्पादन र कोशेलीघर प्रवर्द्धन कार्यक्रम ...... ५१
७.३० औद्योगिक अनुगमन तथा निरीक्षण ...... ५१
७.३१ उद्यम संचालनका लागि ब्यवसायिक योजना निर्माण सबन्धी कार्यविधि तयार ...... ५२



प्रदेश सरकार

७.३२ भवन निर्माण (दाङ)........................................................................................................ ५२
७.३३ अदुवा प्रशोधन केन्द्रको पूर्वाधार निर्माण (पाल्पा ) ........................................................................ ५२
७.३४ माटोका भाँडा बनाउने उद्यम वा उद्यमीको आधुनिकिकरण तालिम तथा प्रविधि सहयोग..................................... ५३
७.३५ एक प्रदेश निर्वाचन क्षेत्र एक औद्योगिक ग्राम स्थापनाका लागि गत वर्षको पूर्व संम्भाब्यता अध्ययनको आधारमा विस्तृत अध्ययन गर्ने ........................................................................................................ ५३
७.३६ एक प्रदेश निर्वाचन क्षेत्र एक औद्योगिक ग्राम स्थापनाका लागि विस्तृत अध्ययन गर्ने ..................................... ५४
७.३७ प्रादेशिक लघु उद्यमी प्रर्बद्धनका लागि रणनितिक योजना निर्माण ........................................................ ५४
७.३८ कृषिमा आधारित आयात प्रतिस्थापन तथा निर्यात प्रबर्द्धन उद्यमहरुको सम्भाव्यता अध्ययन गर्नेः ................................ ५५
७.३९ स्थानको पहिचान गरी कपिलवस्तु, नवलपरासी तथा बर्दियामा औद्योगिक करिडोरको संम्भाब्यता अध्ययन गर्ने................. ५५
७.४० खानी सम्बन्धी कानून ऐन, कार्यविधि लगायत निर्माण ....................................................................... ५६
७.४१ प्रदेश नं ५ रहेका खानी तथा खनिजहरुको बारेमा प्रकाशन मा तथ्याङ्क अद्यावधिक गर्ने.......................................... ५६
७.४२ प्रदेश नं . ५ मा रहेका चुन ढुङ्गा खानीहरुको उत्खनन अनुगमन तथा निरिक्षण गरी प्रतिवेदन तयार गर्ने......................... ५६
७.४३ खानी तथा खनिज सम्वन्धि अनुगमन तथा निरीक्षण .................................................................... ५७
७.४४ खानी तथा खनिज पदार्थ सम्वन्धि विस्तृत अध्ययन (ढुङ्गा, स्लेट खानी, चुनढुङ्गा)........................................ ५७
७.४५ कार्यविधिमा उल्लेखित कार्यक्रमहरुको खर्चको सम्वन्धमा.............................................................. ५८
**परिच्छेद ८** ........................................................................................................ ५९
**वातावरण तथा जलवायु अनुकुलन कार्यक्रम (३०७०००१९)** .......................................................... ५९
८.१ प्रादेशिक वातावरण संरक्षण ऐन, नियम तथा निर्देशिका तयारी.............................................................. ५९
८.२ IEE स्वकृति संयत्र निर्माण तथा कायार्न्वयन ................................................................................ ५९
८.३ IEE/EIA सम्बन्धी उद्योग/संस्था निरिक्षण अनुगमन.......................................................................... ६०
८.४ वातावरण संरक्षण तथा जैविक विविधता सम्बन्धी कार्यशाला गोष्ठी........................................................ ६०
८.५ निरिक्षण अनुगमन उपकरण खरिद (Gas analyser, water quality analyser, sound and vibration analyser)........................................................................................................ ६१
८.६ वातावरणीय स्थिती तथा प्रदुषण वितरण अध्ययन (वायु, जल, ध्वनी, माटो)................................................ ६१
८.७ प्रदेश ५ शून्य विषादी सम्भाव्यता अध्ययन तथा कार्ययोजना निर्माण........................................................ ६२
८.८ मदाने संरक्षित वन क्षेत्रमा रहेका दुर्लभ वनस्पतिहरूको अध्ययन............................................................. ६२
८.९ जगदिशपुर जलाशय तथा आसपास क्षेत्रका वनस्पतिहरूको अभिलेखिकरण................................................... ६३

सचिव

# परिच्छेद १
# परिचय

## १.१ पृष्ठभूमि

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय र मातहतका वन निर्देशनालय, वन अनुसन्धान तथा प्रशिक्षण केन्द्र, उद्योग वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालय, डिभिजन वन कार्यालय, भू तथा जलाधार व्यबस्थापन कार्यालय, घरेलु तथा साना उद्योग कार्यालय/विकास समिति लगायत मन्त्रालयबाट अख्तियारी प्राप्त निकायहरुबाट आ. व. २०७६।०७७ मा संचालन हुने वार्षिक क्रियाकलापहरुको कार्यान्वयमा एकरूपता एवं सहजता ल्याउनका लागि मार्गदर्शनको रूपमा यो वार्षिक कार्यक्रम कार्यान्वियन कार्यविधि तयार गरिएको छ।

## १.२ परिभाषा

विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस कार्यविधिमा,

क. "कार्यविधि" भन्नाले प्रदेश सरकार, उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय र अन्तर्गतका निकायहरु मार्फत वार्षिक कार्यक्रम कार्यान्वयन गर्न उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयवाट स्वीकृत कार्यविधिलाई सम्झनुपर्छ ।

ख. "मन्त्रालय" भन्नाले प्रदेश सरकार, प्रदेश नं. ५, उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयलाई सम्झनुपर्छ ।

ग. "सम्बन्धित निकाय" भन्नाले मन्त्रालयद्वारा कार्यक्रम सञ्चालन गर्न तोकिएको निकायलाई सम्झनुपर्छ ।

घ. "महाशाखा" भन्नाले उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयका महाशाखा सम्झनुपर्छ ।

ङ. "कार्यालय" भन्नाले उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय अन्तर्गत स्थापना भएका कार्यालय सम्झनुपर्छ ।

च. "स्थानीय तह" भन्नाले कार्यक्रम लागु हुने स्थानको उपमहानगरपालिका, नगरपालिका वा गाउँपालिका सम्झनुपर्छ ।

छ. "उद्योग" भन्नाले प्रचलित कानून वमोजिम दर्ता भई सञ्चालन भएका उद्योगलाई सम्झनुपर्छ ।

ज. "प्रचलित कानून" भन्नाले संघ र प्रदेश सरकार, प्रदेश नं ५ ले निर्माण गरेका तथा हाल कार्यान्वयनमा रहेका कानूनहरुलाई जनाउँछ।

झ. "वातावरण मैत्री क्रियाकलापहरू" भन्नाले यस कार्यविधि अनुरूप संचालन हुने निर्माण संबन्धी क्रियाकलापहरू कार्यान्वयन गर्दा सकभर सिमेण्ट, फलाम जस्ता वस्तुहरूको प्रयोग नगरी/कम प्रयोग गरी स्थानिय स्तरमा प्राप्त हुने प्राकृतिक तथा जैविक सामग्रीहरू जस्तैः काठ, ढुंगा, माटो, खर आदीको प्रयोग गरी गरिने कृयाकलापलाइ संझनुपर्छ । सो शब्दले उद्यान, पार्कमा निर्माणजन्य क्रियाकलाप कम र हरियालीजन्य क्रियाकलापहरूलाइ प्राथमिकता दिने समेत जनाउँछ ।

## १.३ कार्यक्रम संचालन प्रक्रिया

स्वीकृत वार्षिक कार्यक्रम निम्न प्रकृया अवलम्बन गरी संचालन गरिनेछ ।

क. स्वीकृत वार्षिक कार्यक्रम प्राप्त भए पश्चात कार्यक्रम कार्यान्वयन योजना बनाई सरोकारवालाहरुको सहभागितामा सार्वजनिक गर्ने।

ख. स्वीकृत वार्षिक कार्यक्रमको विषयगत विशिष्टिकरण र आवश्यकता अनुसार कार्य बिभाजन गरी कर्मचारीहरूलाई जिम्मेवारी तोक्ने।

ग. क्रियाकलापहरूको प्रकृतिको आधारमा क्षेत्र निर्धारण गरी लक्षित समूह, कार्यक्रम संचालन हुने क्षेत्र, स्थानीय तहमा वैठक, छलफल र आवश्यकता अनुसार अन्तरक्रिया र गोष्ठी संचालन गरी कार्यक्रम संचालन हुने स्थानको पहिचान गर्ने ।

घ. विषयगत प्राविधिकबाट कार्यक्रमको विस्तृत सर्वेक्षण, डिजाइन तथा लागत अनुमान तयार गर्ने ।

ङ. विशेष सीपयुक्त जनशक्ति आवश्यक पर्ने भएमा कार्यक्रम अवधिका लागि व्यक्ति वा सेवा करारमा लिएर संचालन गर्ने ।

च. प्रदेश अन्तर्गतका कार्यालयहरूबाट संचालन हुने तालीम तथा अनुसन्धानका विषयहरूमा वन अनुसन्धान तथा प्रशिक्षण केन्द्रसँग समन्वय गरी संचालन गर्न सकिनेछ ।

छ. लागत अनुमान तयार गर्दा आर्थिक मामिला तथा योजना मन्त्रालय, प्रदेश नं. ५ बाट तयार भएको स्वीकृत नर्मस, प्रचलित नर्मस, जिल्ला दररेट वा सम्बन्धित स्थानीय तहको दररेटलाइ आधार लिने ।

ज. लागत अनुमानमा देहायका विषयहरू समावेश गर्ने:

१. कार्यक्रम/क्रियाकलापको शिर्षक

२. कार्यक्रम संचालन हुने स्थान

३. कार्यक्रमको डिजाइन, नक्शा, इकाई, परिमाण, प्रति इकाई लागत र कूल लागत परिमाण अनुमान

४. श्रोत साझेदारीको अवस्था

झ. कार्यक्रम संचालनको लागि प्रस्ताव तयार गर्दा देहायका विषयहरू स्पष्ट खुलाउने

१. कार्यक्रमको नाम

२. कार्यक्रमको पृष्ठभूमी

३. कार्यक्रमको लक्ष्य र उद्देश्य

४. कार्यक्रम संचालन हुने स्थान वा क्षेत्र

५. लक्षीत समूह सम्बन्धी विवरण, लाभान्वित घरधुरी, जनसंख्या

६. कार्यक्रम सञ्चालन विधि र प्रकृया

७. कार्यक्रम शुरु हुने मिति, सम्पन्न गर्न लाग्ने अवधि र लागत अनुमान

८. अपेक्षित उपलब्धीहरू

९. अनुगमन तथा मूल्याङ्कन

## १.४ कार्यक्रम कार्यान्वयन विधि

यसमा उल्लेख भएका कार्यक्रमहरू प्रचलित कानूनको अधिनमा रही तपसिल अनुसार सञ्चालन गरिनेछ ।

क. अमानतबाट

ख. उपभोक्ता समूह वा समितिबाट

ग. ठेक्कापट्टाबाट

घ. परामर्श सेवा खरिदबाट

ङ. साझेदारी वा सम्झौताबाट

## १.५ कार्यक्रमको अनुगमन तथा मूल्याङ्कन विधि

कार्यक्रमको अनुगमन तथा मूल्याँकन तपशिल बमोजिम गरिनेछ ।

क. सम्बन्धित निकायबाट नियमित रूपमा अनुगमन गरी पृष्ठपोषण दिने ।

ख. अनुगमन मूल्याङ्कन गर्दा प्रदेश अनुगमन तथा मूल्याङ्कन दिग्दर्शन, २०७५ लाई आधार लिईनेछ ।

ग. रू. ५ लाख भन्दा वढी लागतका निर्माण सम्बन्धी कार्यक्रमहरुको विवरण खुल्ने गरी होर्डिङ वोर्ड सम्बन्धित निर्माण स्थलमा राख्नुपर्नेछ । यस खालको होर्डिङ वोर्ड सकभर काठ बनाउनु पर्नेछ । यसको खर्च सम्बन्धित कार्यक्रमबाट गर्न सकिनेछ ।

घ. कार्यक्रम कार्यान्वयनको प्रगति मासिक रूपमा सम्बन्धित निकायमा पेश गर्नु पर्नेछ ।

सचिव

प्रदेश सरकार
प्रदेश नं. ५
उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
बुटवल, रुपन्देही

## परिच्छेद २

# वन, वन्यजन्तु, जैविक विविधता संरक्षण तथा ब्यवस्थापन कार्यक्रम (३०७०००१२)

## २.१ वन, वन्यजन्तु, वातावरण, जैविक विविधता सम्बन्धी कानून निर्माण

यस कार्यक्रमको मूल उद्देश्य वन, वातावरण, जैविक विविधता, जलाधार व्यबस्थापन सम्बन्धी नीतिगत विषयहरुको निर्माण गर्नु रहेको छ । कार्यक्रमको कार्यान्वयन निम्न अनुसार गरिनेछ ।

क. प्रदेश स्तरमा आवश्यक पर्ने वन, वातावरण, जैविक विविधता, जलाधार व्यबस्थापन सम्बन्धी आवश्यक ऐन, नियम र रणनीतिक योजनाहरू निर्माण गरिनेछ ।

ख. स्वीकृत वार्षिक कार्यक्रम र वजेटको प्रभावकारी कार्यान्वयनका लागि आवश्यकता अनुसार विभिन्न कार्यविधि, निर्देशिका, मापदण्डहरू तयार गरिनेछ ।

ग. कानून निर्माण, कार्यविधि निर्माणका क्रममा राय संकलन, वैठक, परामर्श सेवा, गोष्ठी, छपाइ सम्बन्धी कार्य समेत गर्न सकिनेछ ।

घ. यस शीर्षकमा विनियोजित रकम आवश्यक प्रकृया पुरा गरी वार्षिक योजना तर्जुमा तथा समीक्षा गोष्ठीहरुमा समेत खर्च गर्न सकिनेछ ।

## २.२ सिमसार क्षेत्र संरक्षण पोखरी निर्माण कार्यक्रम

यस कार्यक्रमको मूल उद्देश्य सिमसार तथा अन्य पानीका स्रोतहरुको दिगो संरक्षण गर्नु रहेको छ । कार्यक्रमको कार्यान्वयन निम्न अनुसार गरिनेछ ।

क. प्राकृतिक सिमसारहरुको प्राथमिकताको आधारमा (संवेदनशीलता र आर्थिक, सामाजिक, सांस्कृतिक तथा पर्यटकीय महत्वका) संरक्षण, जिर्णोद्दार र व्यवस्थापनका क्रियाकलाप गरिनेछ ।

ख. यस कार्यक्रमबाट नयाँ पोखरी निमार्ण गर्नु परेको अवस्थामा वन क्षेत्रको रूखविरूवाहरू नभएको र प्राकृतिक रूपमा पानी जम्ने वा खोंच, खोल्सा खोल्सी भएका स्थानहरूलाइ प्राथमिकता दिइनेछ । क्षेत्र छनोट गर्दा सम्बन्धित सव डिभिजन कार्यालयहरू, स्थानीय सरोकारवालाहरूसँग छलफल, अन्तरक्रिया र ठाउँको उपयुक्ततालाई आधार लिनुपर्नेछ ।

ग. यस खालका पोखरी निर्माण गर्दा वर्षातको पानी संकलन भइ जमिन रिचार्ज हुने, वन्यजन्तु तथा चराचुरूङ्गीहरुको लागि पिउने पानीको स्रोत उपलब्ध हुने, वन डढेलो नियन्त्रणका लागि उपयोग हुने र सिचाईका लागि समेत उपयोगी हुने कुरामा ध्यान दिनुपर्नेछ । वन्यजन्तु, जनावर तथा मानिसको जिउज्यानको सुरक्षालाइ ध्यानमा राखी सकेसम्म पोखरीको डिल कराही आकारको हुनुपर्नेछ ।

घ. कार्यालयबाट स्थान छनोट, लागत अनुमान, डिजाइन, सम्झौता गरी कार्य सम्पन्न गर्नुपर्नेछ ।

ङ. यो कार्य स्थानीय समूह मार्फत कार्यान्वयन गर्न उपयुक्त हुनेछ ।



सचिव

च. यो कार्य गर्दा स्थानीय तहसंग सहकार्य गर्न सकिनेछ ।

छ. प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, पोखरीको साइज, क्षमता (घ.मि.), GPS लोकेशन, रोजगारी सिर्जना र खर्च रकम आदि उल्लेख गर्नुपर्नेछ ।

## २.३ सडक सौन्दर्यीकरण कार्यक्रम

यस कार्यक्रमको मूल उद्देश्य शहर केन्द्रित सडक किनारमा बृक्षारोपण र व्यवस्थापन गरी सौन्दर्यता बढाउनु र वातावरण संरक्षण गर्नु रहेको छ । कार्यक्रमको कार्यान्वयन निम्न अनुसार गरिनेछ ।

क. कार्यालयबाट यस कार्यका लागि स्थानीय तह एवं समुदायसँग समन्वय सहकार्य गरी, संरक्षणको सुनिश्चतता भएको स्थानका सडक छनोट गर्ने र लागत अनुमान तयार गर्ने ।

ख. सडक किनारा वृक्षारोपणका लागि उपयुक्त सौन्दर्यवर्धक, सुगन्धित प्रजातिका हुर्केका र यथासंभव बहुवर्षिय ठूला बिरुवा छनोट गर्नुपर्नेछ ।

ग. नर्सरीमा बिरुवा उपलब्ध नभएमा विरूवा खरिद गरी रोपण गरिनेछ ।

घ. स्थानीय तहसँग समन्वय गरी विरूवा संरक्षणको व्यवस्था मिलेपछिमात्र बृक्षारोपण गर्नु पर्नेछ ।

ङ. यस शीर्षकमा विनियोजन भएको वजेटबाट आवश्यकता विरूवा खरिद, ढुवानी, विरूवा रोपण, इन्धन, अनुगमन सहजीकरण लगायतका कृयाकलापमा समेत खर्च गर्न सकिनेछ ।

च. कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नु पूर्व र कार्य सम्पन्न पश्चातको फोटो, बिरुवा रोपण, GPS लोकेशन, रोजगारी सिर्जना र खर्च रकम आदि उल्लेख गर्नुपर्नेछ ।

## २.४ वनमा आधारित उत्पादन कार्यक्रम (ढलापडा काठदाउरा संकलन समेत)

यस कार्यक्रमको मूल उद्देश्य कुहिएर सडीगली जान सक्ने काठ दाउराको समयमै सदुपयोग गरी आपूर्तिमा सहज गर्नुका साथै राजस्वमा टेवा पुऱ्याउनु रहेकोछ। यस कार्यक्रम कार्यान्वयन निम्न अनुसार गरिनेछ ।

क. वनमा हावाहुरी वा अन्य कारणले ढलेका रूखहरूलाई तत्कालै प्रचलित कार्यविधि बमोजिमको प्रक्रिया पुरा गरी संकलन, सुरक्षित घाटगद्दि र लिलाम बिक्री गर्ने ।

ख. यस कार्यक्रमबाट कार्यलय परिसर तथा अन्य सार्वजनिक स्थलका रुखहरु निर्णय निकासा भई हटाउनु पर्ने भएमा सो समेत गर्ने।

ग. यसमा विनियोजित वजेट आवश्यकता अनुसार रूख छपान, कटान, संकलन, घाटगदी लगायतका क्रियाकलापमा खर्च गर्ने।

घ. कार्य सम्पन्न पश्चात कटान रुख संख्या उत्पादन परिमाण, रोजगारी लगायतका प्रगतिको विवरण तोकिएको ढाँचामा उपलब्ध गराउनु पर्नेछ ।

सचिव

प्रदेश सरकार
प्रदेश नं ५
उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
बुटवल, रुपन्देही

## २.५ जैविक विविधता संरक्षण र प्रवर्द्धन कार्यक्रम (सूचना केन्द्र स्थापना, अभिलेखीकरण आदि)

यस कार्यक्रमको मूल उद्देश्य सामाजिक आर्थिक महत्वका लोपोन्मुख अवस्थामा रहेका वनस्पति तथा वनजन्तुहरुको संरक्षण, प्रवर्द्धन, सम्वर्द्धन र विकास गर्नु रहेको छ। कार्यक्रमको कार्यान्वयन निम्न अनुसार गरिनेछ ।

क. यस कार्यक्रम अन्तर्गत सामाजिक, आर्थिक महत्व बढी भएका, लोपोन्मुख अवस्थामा रहेका वनस्पति तथा वन्यजन्तुहरुको सर्वेक्षण अध्ययन अनुसन्धान गर्ने, डकुमेन्टेसन गर्ने, संकटापन्न, लोपोन्मुख, स्थानीय प्रजातीहरुको बासस्थान संरक्षण गर्ने, जैविक विविधता सूचना केन्द्र स्थापना गर्ने लगायतका कार्यहरु आवश्यकता अनुसार गरिनेछ ।

ख. जैविक विविधता सम्बन्धी सूचनाहरू संकलन गर्ने, पुस्तिका प्रकाशन गर्ने, प्रचार प्रसार गर्ने लगायतका क्रियाकलापहरू आवश्यकता अनुसार गरिनेछ ।

ग. जैविक विविधता संरक्षणका लागि नियमित गस्ती परिचालन गरी संरक्षणका कार्यहरु गरिनेछ ।

घ. कार्य सम्पन्न पश्चात कार्य सम्पन्न गरिएको स्थान, सञ्चालित कृयाकलापहरु , खर्च रकम कार्यक्रमका झलक देखिने फोटोहरु, श्रृजित रोजगारी समेतको विवरण समेटी प्रतिवेदन पेश गर्नु पर्नेछ ।

## २.६ वृक्षारोपण कार्यक्रम (विरूवा उत्पादन, नर्सरी निर्माण, मर्मत, वृक्षारोपण, निजी तथा कृषि वन आदि)

यस कार्यक्रमको मूल उद्देश्य निजी, सार्वजनिक र सरकारी जग्गामा वृक्षारोपण मार्फत उत्पादन र उत्पादकत्व वृद्धिगरी आय आर्जन, रोजगारी र सम्वृद्धीमा टेवा पुऱ्याउदै हरियाली वृद्धि मार्फत जलवायु परिवर्तन न्यूनीकरणमा समेत योगदान पुऱ्याउने रहेको छ । यसका साथै वन क्षेत्रबाट टाढा रहेका उपभोक्ताहरूलाई वनपैदावारमा पहुँच पुऱ्याउनु रहेको छ । यस कार्यक्रमबाट नर्सरी निर्माण, नर्सरी मर्मत, विरूवा उत्पादन, वृक्षारोपण, निजी तथा कृषि वन प्रवर्द्धन जस्ता कार्यहरू आवश्यकताको आधारमा गरिनेछ । कुन कार्यक्रममा कति खर्च गर्ने आवश्यकता र औचित्यका आधारमा बाँडफाँडको पूर्वयोजना तयार गरी कार्यक्रम सञ्चालन गर्नुपर्नेछ ।

### २.६.१ नर्सरी निर्माण / मर्मत

क. आवश्यकता अनुसार पुराना नर्सरी मर्मत, नयाँ नर्सरी निर्माण, भैरहेका नर्सरीलाई उच्च प्रविधियुक्त नर्सरीमा स्तरोन्नति गरिनेछ ।

ख. निर्माण तथा मर्मत कार्य प्रचलित मापदण्ड बमोजिम हुनेछ ।

ग. नर्सरीमा पानी टंकी, वारवेर, सिंचाई, हरेक वेडमा छहारी तथा ट्यागिङको व्यवस्था हुनुपर्नेछ ।

घ. नर्सरी वरिपरि रमणीय वातावरण, फूल रोप्ने, वातावरणमैत्री विश्रामस्थल बनाउने कार्य गर्न सकिनेछ ।

### २.६.२ विरूवा उत्पादन

क. नर्सरीमा विरूवा उत्पादन गर्दा स्थानीय र प्रदेशको आवश्यकता तथा व्यवसायिक महत्वका विरूवालाई ध्यान दिई जात, संख्या र साइज खुल्ने गरी बिरूवा उत्पादन योजना तयार गर्नुपर्नेछ । सो गर्दा बिरुवाको प्रकृति अनुसार उपयुक्त बिरुवा उत्पादन गर्न आवश्यक अवधिका आधारमा उपयुक्त साइजको पोलिब्यागमा उत्पादन गर्नु पर्नेछ। बिरूवा उत्पादन योजना बमोजिम वर्षै भरी नर्सरी नाइके आवश्यक भएमा राख्न सकिनेछ ।

ख. विरूवा उत्पादनको प्रतिवेदनमा नर्सरी रहेको स्थान, क्षेत्रफल, क्षमता, GPS लोकेशन, जात, उमेर अनुसार विरूवा संख्या, फोटो, बीउको श्रोत, वितरण/उपयोग रजिष्टर, रोजगारी सृजना लगायतका विवरण राख्नुपर्नेछ ।

२.६.३ वृक्षारोपण

क. वार्षिक वृक्षारोपण योजना (स्थान, नक्शा, क्षेत्रफल, संख्या, प्रजाति समेत) तयार गर्नुपर्नेछ ।
ख. सकभर वृहत क्षेत्रमा वृक्षारोपण गर्ने कार्यलाई प्राथमिकता दिनुपर्नेछ ।
ग. गत बर्षहरूमा भएका बृक्षारोपण क्षेत्रको गोडमेल, पुनःरोपण र संरक्षणको व्यवस्था समेत यसै शिर्षकबाट गर्न सकिनेछ ।
घ. वृक्षारोपण पश्चात संरक्षणको सुनिश्चितताका लागि आवश्यकता अनुसार तारबार, घेरबार, हेरालु लगायतका क्रियाकलापहरू समेत गरिनेछ।
ङ. यस अन्तर्गत विभिन्न दिवस, समारोहमा गरिने वृक्षारोपणमा आवश्यक सहयोग गर्न सकिनेछ ।

२.६.४ निजी तथा कृषि वन प्रवर्द्धन

क. निजी क्षेत्र, सार्वजनिक क्षेत्र तथा हैसियत कम भएका वन क्षेत्रमा जमिनको उत्पादकत्वमा बृद्धि ल्याउन तथा स्थानीय जनताको आय आर्जनमा सहयोग पुऱ्याउन यो कार्यक्रम संचालन गरिनेछ ।
ख. स्थान तथा समूह छनोट गर्ने, प्रस्ताव तयार गर्ने, समूहसँग सम्झौता गर्ने, वृक्षारोपण गर्ने र अनुगमन गर्ने कार्यहरू गर्नुपर्नेछ ।

## २.७ खाता जैविक मार्गमा वन्यजन्तु ओहोर दोहोर गर्ने सुरूङ पुल निर्माण (Under pass / Over pass bridge) का लागि विस्तृत योजना प्रतिवेदन तयार गर्ने

खाता जैविक मार्गमा वन्यजन्तु ओहोर दोहोर गर्ने सुरूङपुल निर्माण (Under pass / Over pass bridge) का लागि DPR तयार गर्नका लागि सार्वजनिक खरिद ऐन, २०६३ र सार्वजनिक खरिद नियमावली, २०६४ (संशोधित समेत) मा उल्लेख भएका प्रावधानको अधिनमा रही कार्य सम्पन्न गर्नुपर्नेछ ।

## २.८ वनको वैज्ञानिक, व्यवसायिक र दिगो व्यबस्थापन

वनको हैसियतमा सुधार गरी वनको उत्पादन र उत्पादकत्व अभिवृद्धि गर्दै दिगो रूपमा वन पैदावार प्राप्त गर्ने उद्देश्यले स्वीकृत वैज्ञानिक वन व्यबस्थापन कार्यविधि, २०७१ को अधिनमा रही सामुदायिक वन, साझेदारी वन र चक्ला वनमा यो कार्यक्रम कार्यान्वयन गरिनेछ । यस कार्यक्रममा बिनियोजित बजेट स्विकृत कार्ययोजना अनुसार पुनरूत्पादन कटान, पुनरूत्पादन तयारी कटान, थिनिङ तथा सुधार कटान, पुनरूत्पादन अभिबृद्धि कार्यक्रम, अग्नीरेखा मर्मत संभार, अग्नी रेखा निर्माण, खहरे तथा पानी निकास व्यवस्थापन, वन संरक्षण र वैज्ञानिक वन व्यवस्थापन कार्ययोजना तयार गर्ने कार्यलाई प्राथमिकता दिई खर्च गर्नु पर्नेछ ।

२.८.१ सामुदायिक वन व्यवस्थापन

क. नयाँ वन व्यवस्थापन कार्ययोजना तयार गर्दा स्वीकृत वैज्ञानिक वन व्यवस्थापन कार्ययोजना तयार गर्ने नर्म्स बमोजिम लागत अनुमान तयार गर्नुपर्नेछ ।

ख. वन कार्ययोजना तयार गर्दा डिभिजन वन कार्यलयको मानवीय श्रोतले नभ्याउने अवस्थामा परामर्श सेवा लिई कार्ययोजना तयार गरिनेछ ।

ग. परामर्श सेवाबाट कार्ययोजना तयार गर्दा समूहसँग सम्झौता गरी लागत अनुमान बमोजिमको रकम समूह मार्फत भुक्तानी गर्न सकिनेछ ।

घ. कम लागतका (रू.१ लाख भन्दा कम) कार्ययोजना निर्माण, संशोधन, थिनिङ लगायतका कार्यान्वयनका लागि अमानतबाट गर्न सकिनेछ ।

ङ. पुनरूत्पादन कटान पश्चात वा अन्य कारणबाट बारबेर गर्नुपरेमा कटानबाट उत्पादित हाँगा विंगा वा थिनिङबाट प्राप्त काठबाट पोल खम्बा तयार गरी नेट जालीको बारबेर गर्नुपर्नेछ । वन्यजन्तुको स्वास्थ्य सुरक्षा तथा वातावरणीय दृष्टिकोणले समेत सिमेण्टको पोल र काँडेतार प्रयोग गर्न पाइने छैन ।

### २.८.२ साझेदारी वन व्यबस्थापन

यस शिर्षकमा विनियोजित भएको रकम स्वीकृत वन व्यबस्थापन कार्ययोजना र व्यबस्थापन सँग संबन्धित अन्य आवश्यक कृयाकलापहरू संचालन गर्न खर्च गरिनेछ । आवश्यक कृयाकलापहरूको पहिचान गरी रकम बाँडफाँड गरी नियम अनुसार कार्यान्वयन गर्नुपर्नेछ (माथि २.८ मा उल्लेख गरिएका कृयाकलापहरूलाई प्राथमिकता दिई गर्नु पर्ने)।

क. पुनरूत्पादन कटान पश्चात वा अन्य कारणबाट बारबेर गर्नुपरेमा कटानबाट उत्पादित हाँगा विंगा वा थिनिङबाट पोल खम्बा तयार गरी नेट जालीको बारबेर गर्नुपर्नेछ । वन्यजन्तुको स्वास्थ्य सुरक्षा तथा वातावरणीय दृष्टिकोणले समेत सिमेण्टको पोल र काँडेतार प्रयोग गर्न पाइने छैन ।

ख. कार्य सम्पन्न भए पश्चात तोकिएको ढाँचामा प्रतिवेदन तयार गर्नुपर्नेछ ।

### २.८.३ चक्ला वन व्यवस्थापन

यस शीर्षकमा विनियोजित भएको रकम स्वीकृत वन व्यबस्थापन कार्ययोजना र व्यबस्थापनसँग सम्बन्धित अन्य आवश्यक कृयाकलापहरू संचालन गर्न खर्च गरिनेछ । आवश्यक क्रियाकलापहरूको पहिचान गरी रकम बाँडफाँड गरी नियम अनुसार कार्यान्वयन गर्नुपर्नेछ (माथि २.८ मा उल्लेख गरिएका कृयाकलापहरूलाई प्राथमिकता दिई गर्नु पर्ने) ।

क. पुनरूत्पादन कटान पश्चात वा अन्य कारणबाट बारबेर गर्नुपरेमा कटानबाट उत्पादित हाँगा विंगा वा थिनिङबाट पोल खम्बा तयार गरी नेट जालीको बारबेर गर्नुपर्नेछ । वन्यजन्तुको स्वास्थ्य सुरक्षा तथा वातावरणिय दृष्टिकोणले समेत सिमेण्टको पोल र काँडेतार प्रयोग गर्न पाइने छैन ।

ख. यस कार्यक्रम कार्यन्वयन गर्दा चक्ला वन संरक्षण तथा व्यवस्थापनको लागि आवश्यक पर्ने भौतिक पूर्वाधार कमि वा नभएमा चौकिदार भवन, सम्बन्धित सव डिभिजन वन कार्यालय भवनको मर्मत सम्भार, सवारी साधन व्यवस्थापन एवं कार्यालय सञ्चालन गर्न अन्य आवश्यक क्रियाकलाप समेत गर्न सकिनेछ। तर यस शीर्षकमा विनियोजन भएको रकमको २० प्रतिशत भन्दा बढी रकम यस्ता क्रियाकलापमा खर्च गर्न पाईनेछैन ।

ग. कार्यसम्पन्न भए पश्चात तोकिएको ढाँचामा प्रतिवेदन तयार गर्नुपर्नेछ ।



सचिव

## २.९ वन व्यवस्थापन (समुदायमा आधारित वन, राष्ट्रिय वन लगायतको कार्ययोजना निर्माण, पुनरावलोकन, अनुगमन आदि)

यस कार्यक्रमको मूल उद्देश्य वन व्यवस्थापन योजना निर्माण, योजना कार्यान्वयन र अनुगमनलाई प्रभावकारी बनाई वनको उत्पादन र उत्पादकत्व वृद्धि मार्फत समृद्धिमा टेवा पुऱ्याउनु रहेको छ ।

क. यस शीर्षकमा विनियोजित भएको रकम विगत देखी सञ्चालनमा रहेका सामुदायिक वन, कबुलियति वन, धार्मिक वन र संरक्षित वन व्यबस्थापनसँग सम्बन्धित विभिन्न कार्यक्रमहरूको निरन्तरताको सुनिश्चितता गरी रकम बाँडफाँड गर्नुपर्नेछ ।

ख. सवै प्रकारका वनको व्यबस्थापन कार्ययोजना निर्माण, कार्ययोजना पुनरावलोकन, समूह गठन, प्रारम्भिक वातावरणीय परिक्षण (IEE), वन सम्वर्द्धनका क्रियाकलापहरू, कबुलियति वनका प्राविधिक र सामाजिक परिचालक परिचालन, सवै प्रकारको वनको अनुगमन गरी अभिलेखीकरण र प्रकाशन, वार्षिक योजना तर्जुमा र समिक्षा, समूह र कर्मचारीका लागि क्षमता अभिवृद्धि, कर्मचारी, कृषक, समूह र संघसंस्थालाई पुरस्कार वितरण लगायतका क्रियाकलापहरू आवश्यकता अनुसार गर्नु पर्नेछ ।

ग. कबुलियति वनको व्यवस्थापन गर्दा रोपण गरिने विरुवाको ४० प्रतिशतमा नबढ्ने गरी फलफूलका विरुवा वन प्रजातिसँग समिश्रण गरी रोपण गर्नुपर्नेछ । चालु आ.व. मा नमुना स्वरूप कम्तीमा एक जिल्ला एक कबुलियति वनमा यस प्रकारको वृक्षारोपण गर्नुपर्नेछ ।

घ. प्रगति प्रतिवेदनमा क्रियाकलाप भएको स्थान, क्रियाकलापको विवरण, फोटो, खर्च रकम, उपलब्धीहरू, सृजित रोजगारी समेतको विवरण पेश गर्नुपर्नेछ ।

## २.१० वन संरक्षण (वन अतिक्रमण, वन अपराध नियन्त्रण, वन डढेलो रोकथाम तथा नियन्त्रण, चोरी निकासी नियन्त्रण, वन्यजन्तु संरक्षण आदी)

यस कार्यक्रमको मुल उदेश्य वन, वन्यजन्तु र वन क्षेत्रको प्रभावकारी संरक्षण, सम्वर्द्धन र व्यवस्थापन गर्नु रहेको छ । यस शीर्षकमा विनियोजन भएको वजेट आवश्यकता अनुसार तपसिलमा उल्लेखित कृयाकलापहरूमा खर्च गरिनेछ ।

क. वन तथा वन्यजन्तु सम्बन्धी अपराध न्यूनीकरण तथा नियन्त्रणका लागि नियमित गस्ती परिचालन गर्ने,

ख. वन अतिक्रमण नियन्त्रण र व्यवस्थापन र वनको पुनर्स्थापना गर्ने,

ग. वन डढेलो नियन्त्रणका लागि योजना तयारी, पूर्व तयारीका क्रियाकलापहरु, अग्नी नियन्त्रकको व्यवस्थापन, अग्निरेखा निर्माण तथा मर्मत, जनचेतना अभिवृद्धि, संजाल निर्माण, प्रचार प्रसार, गोष्ठी वैठक सञ्चालन, अग्निरोधक सामग्रीहरू खरिद तथा वितरण, वन डढेलो नियन्त्रणका लागि खटिने जनशक्तीका लागि आवश्यक पर्ने खाना र खाजाको व्यवस्थापन, डढेलो नियन्त्रणमा प्रयोग हुने सवारी साधन मर्मत, भाडामा लिने तथा इन्धन व्यवस्थापन गर्ने,

घ. वन तथा वन्यजन्तु सम्बन्धी अपराध अनुसन्धान, मुद्दा दायरी, सुराकी परिचालन गर्ने,

ङ. वन्यजन्तु चोरीनिकासी नियन्त्रण, घाइते तथा टुहुरा वन्यजन्तुको उद्दार तथा व्यबस्थापन गर्ने,

च. प्रगति प्रतिवेदनमा कृयाकलाप भएको स्थान, संरक्षण कृयाकलापहरूको विवरण, फोटो, खर्च रकम, उपलब्धीहरू, सृजित रोजगारी समेतको विवरण पेश गर्नुपर्नेछ ।



सचिव

## २.११ विभिन्न दिवस, समारोह, प्रचार प्रसार आदि

यस कार्यक्रमको मुल उदेश्य वन, वनस्पति, वन्यजन्तु, जलाधार, जैविक विविधता, सिमसार, वातावरण, जलवायु परिवर्तन लगायतका विषयमा जनचेतना अभिवृद्धि गर्ने रहेको छ । यस कार्यक्रमबाट आवश्यकता अनुसार निम्न अनुसारका कृयाकलापमा खर्च गरिनेछ ।

क. आम संचारका माध्यमहरू रेडियो, टेलिभिजन र पत्रपत्रिकाबाट सन्देशमूलक सामग्री निर्माण तथा प्रसारण गर्ने,
ख. सूचनाको हक संवन्धी बिषयहरूमा कार्यालयका गतिविधिहरूको नियमित प्रकाशन, सबडिभिजन स्तरमा सार्वजनिक सुनुवाइ, वेभसाइट सञ्चालन गर्ने,
ग. पुस्तिका प्रकाशन, प्रचार प्रसार सामग्री उत्पादन र बितरण गर्ने,
घ. वन महोत्सव, विश्व सिमसार दिवस, जैविक विविधता दिवस, विश्व वातावरण दिवस, प्रदेश स्थापना दिवस, वन डढेलो सप्ताह लगायत अन्य दिवस तथा समारोहको आयोजना गर्ने,
ङ. कार्यदल र सरोकारवालाहरूसँगको समन्वय वैठक, गोष्ठी आदि गर्ने,
च. प्रगति प्रतिवेदनमा क्रियाकलाप भएको स्थान, क्रियाकलापहरूको विवरण, फोटो, खर्च रकम, उपलब्धीहरूको विवरण पेश गर्नुपर्नेछ ।

## २.१२ वन अनुसन्धान तथा प्रशिक्षण

वन अनुसन्धान तथा प्रशिक्षण केन्द्रवाट संचालित तालिम तथा अनुसन्धान कार्यक्रमको मूल उद्देश्य फिल्डमा कार्यरत कर्मचारीहरुको क्षमता अभिवृद्धी र वन क्षेत्रमा रचनात्मक प्रविधि विकास एवं विस्तारका लागि आवश्यक अनुसन्धान गर्नु रहेको छ ।

### २.१२.१ वन जडिवुटी तथा गैरकाष्ठ वन पैदावार, लोकल भोल्यूम टेबल सम्बन्धी अध्ययन गर्ने (अन्य अनुसन्धान)

निम्न लिखित विषयहरुलाई प्राथमिकता दिई, स्वीकृत वजेटको परिधिमा रहि तल उल्लेखित अनुसन्धानका कार्यहरु संचालन गरिने छ । यी अनुसन्धानका क्रियाकलापहरू प्रशिक्षण केन्द्र आफै वा परामर्श सेवाबाट गरिनेछ ।

क. सामुदायिक वन, साझेदारी वन तथा सरकारद्धारा ब्यवस्थित वनहरुमा वैज्ञानिक वन ब्यवस्थापनको प्रभावकारीता अध्ययन गर्ने,
ख. खोटे सल्लाको वनमा खोटो संकलनले पारेको प्रभाव अध्ययन गर्ने,
ग. कवुलियती वन लागु भएका क्षेत्रमा कवुलियती वनले जिविकोपार्जनमा पारेका प्रभाव अध्ययन गर्ने,
घ. छिटो वढ्ने वा वहुमुल्य प्रजातिको अध्ययन, अनुसन्धान वा अनुसन्धान स्थल स्थापना गर्ने,
ङ. वन क्षेत्रसँग सम्वन्धित ब्यवस्थापन सूचना प्रणाली विकास गर्ने,
च. ग्रेडिङ तथा चिरान प्रतिशत सम्वन्धि अध्ययन गर्ने,
छ. वन क्षेत्रबाट सिर्जना हुने रोजगारी संबन्धी अध्ययन गर्ने ।

### २.१२.२ कर्मचारी सीप विकास तथा क्षमता अभिबृद्धी तालिम (वैज्ञानिक वन व्यवस्थापन, वन श्रोत सर्वेक्षण)

यो कार्यक्रम निम्नानुसार गरिनेछ ।



सचिव

प्रदेश सरकार
प्रदेश नं ५

क. तालिमहरु संञ्चालन गर्नका लागि वन वातावरण तथा पर्यटन क्षेत्रका कर्मचारीहरुको तालिम आवश्यकता पहिचान भएका विषयहरुलाई प्राथमिकता दिई सवै सेवा समूह र तहलाई क्रमशः समेट्ने गरी संचालन गर्नु पर्नेछ ।
ख. तालिमका एकमुष्ट कार्यक्रमहरु विभाजन गरी तालिमको नाम, सहभागिको स्तर, वजेट, अवधि सहितको समयतालिका (तालिम क्यालेण्डर) वनाई सार्वजनिक गरिनेछ ।
ग. यस शिर्षकवाट तालिमका अतिरिक्त आवश्यकता अनुसार वन क्षेत्रसँग सम्वन्धित विषयमा तालिम पुस्तिका निर्माण गर्ने, प्रचार प्रसार पूस्तिका वनाउने, वार्षिक पुस्तिका प्रकाशन गर्ने, तालिम डाटावेस तयार गर्ने, पुस्तकालय ब्यवस्थापन गर्ने, रोष्टर तयार गर्ने कार्य समेत गरिनेछ ।
घ. तालिमको प्रभावकारिता मूल्यांकन गर्नका लागि तालिम सम्पन्न भए पश्चात अनुगमन गर्ने कार्य समेत सम्वन्धित तालिमको प्याकेजमा नै लागत अनुमानमा राखी कार्यक्रम स्वीकृत गराई मूल्यांकन समेत गर्नुपर्ने छ तर यो अनुगमन खर्च कुल वजेटको ५ प्रतिशत नवढने गरी (डि.एस.ए., गाडी, इन्धन, स्टेसनरी, फिल्ड गीयर, अनुगमन प्रतिवेदन तयारी जस्ता कार्यमा) खर्च गर्नुपर्ने छ। एक भन्दा वढी तालिमको अनुगमन एकै पटक समेत गर्न सकिने छ ।

## २.१३ मानव वन्यजन्तु द्वन्द्व व्यबस्थापन कार्यक्रम

यस कार्यक्रम अन्तर्गत घाइते तथा टुहुरा वन्यजन्तु तथा वन्यजन्तुको आक्रमणबाट घाइते मानवको उद्दार गर्ने, वन्यजन्तुको नियमित आवतजावत गर्ने टुटेको वा साँघुरिएको जोखिमयुक्त बाटोको अध्ययन र व्यवस्थापन गर्ने, वासस्थान सुधार गर्ने, छेकबार व्यबस्थापन गर्ने, पछि फिर्ता हुने गरी अवस्था अनुसार बढीमा बीस हजार रुपैया तत्काल राहतको व्यबस्थापन गर्ने लगायतका कृयाकलापहरू गर्न सकिनेछ। सामान्यतया बस्ती र जंगलको बीचमा वन्यजन्तुबाट बारम्बार क्षति हुने स्थानमा ट्रेन्च खनेर बाँस रोप्ने, वालमेश फेन्स तयार गरी छेकवार निर्माण गर्न सकिनेछ। त्यसैगरि चितुवाबाट हुने क्षति न्यूनीकरण गर्नको लागि विद्युत नपुगेका विपन्न घरधुरीहरुलाई सौर्य बत्ती जडानको काम समेत गर्न सकिनेछ।

## २.१४ वन अनुसन्धानका लागि आवश्यक पर्ने उपकरण, मेसिन खरिद

कार्यालयलाई के-कति उपकरण, मेसिनहरु आवश्यक पर्ने हो सो सम्बन्धमा स्टाफ मिटिङ बसी निर्णय गरी बैठकबाट तोकिए बमोजिम प्रचलित कानून बमोजिम खरिद गरिनेछ।

सचिव

# परिच्छेदः ३

# जडिवुटी तथा गैह्रकाष्ठ वन पैदावार विकास कार्यक्रम (३०७०००१४)

## ३.१ जडीवुटी तथा गैरकाष्ठ वनपैदावार संरक्षण, व्यबस्थापन, व्यवसायीकरण संबन्धी कृयाकलाप

यस कार्यक्रमको मूल उद्देश्य वहुमूल्य प्रजातिका जडीवुटी तथा गैरकाष्ठ वनपैदावारहरूको संरक्षण व्यवस्थापन र खेती विकासबाट उत्पादन र उत्पादकत्व वृद्धि गरी स्थानीय समुदायको आय आर्जनमा टेवा पुर्याउने रहेको छ । यस प्रदेशमा जडिवुटीको सम्भावनालाई मध्यनजर गरी पकेट क्षेत्र विशेष जडिवुटी बिरुवाहरु उत्पादन गर्ने, बृहत रुपमा जडिवुटी खेती गर्ने र बैकल्पिक आयश्रोतको विकास गर्ने रणनीतिका साथ यो कार्यक्रम संचालन गरिनेछ । जडिवुटी खेती पकेट क्षेत्रमा मात्र संचालन गर्नुपर्नेछ । पकेट क्षेत्रको पहिचान डिभिजन वन कार्यालयले स्थानीय सरोकारवालाहरुको राय परामर्शवाट गर्नेछ ।

यस शीर्षक अन्तर्गत आवश्यकता अनुसार निम्न कृयाकलापहरू गरिनेछ ।

क. प्राकृतिक रुपमा रहेका जडीबुटी तथा गैरकाष्ठ वन पैदावारको संरक्षण र व्यवस्थापन गरी दीगो उत्पादन गर्ने किसिमका कार्यक्रम गरिनेछ । यसका साथै जडीबुटी तथा गैह्रकाष्ठ प्रजातीका विरुवा उत्पादन गर्दा उच्च मूल्य भएका, बजारमा माग भएको स्थानीय किसानको रुचि, स्थान विशेष हावापानीमा हुर्कन सक्ने जडिबुटी तथा सुगन्धित वनस्पतिका बिरुवाहरु उत्पादन गर्नुपर्ने छ । आवश्यकता अनुसार बहुबर्षिय विरुवा समेत नर्सरीमा उत्पादन गरिनेछ ।

ख. विरुवा उत्पादन गर्दा कार्यालय आफैले वा सामुदायिक वन, निजी नर्सरी, साझेदारी वनसँग सहकार्य गरी विरुवा उत्पादन गरिनेछ । विरुवा उत्पादन गर्न नसकिएको अवस्थामा गुणस्तरिय विरुवा खरिद गर्नु पर्नेछ ।

ग. जडिबुटी खेती विस्तारका लागी पकेट क्षेत्रमा छनौट भएको प्रजातीको वृहत्तर वृक्षारोपण गर्नुपर्नेछ, यसरी वृक्षारोपण गर्दा स्थानीय वन समुहसंग सहकार्य गरी गर्नु पर्नेछ । सार्वजनिक तथा सरकारी जग्गामा वृक्षारोपण गर्दा जग्गा तयारी, रोपण र आवश्यक परेमा बारबेर सहितको संरक्षणका लागी स्विकृत ल.ई. र कार्यसूची (ToR) अनुसारको सम्झौता गरी कार्य प्रगतीको आधारमा भूक्तानीको व्यवस्था मिलाउनु पर्नेछ ।

घ. पकेट क्षेत्रमा रहेका निजी जग्गामा कृषकहरुको समूह बनाइ चक्लाको रुपमा खेती गर्न विरुवा ढुवानी गरी प्रोत्साहन स्वरुप स्थलगत रुपमा नै विरुवा उपलब्ध गराउन सकिनेछ । यस कार्यको प्रभावकारीताका लागि स्थानिय तहसँग समन्वय गरी रोपण वारवेर र सिंचाइ आदिको ब्यवस्थापन गर्न सकिने छ ।

ङ. जडिवुटी रोपण गर्ने कृषक समूह, स्थानिय वन समूह र सरोकारवालाको समन्वय बैठक, अन्तरक्रिया, गोष्ठी , स्थलगत कोचिङ्ग, अध्ययन भ्रमण समेतका कृयाकलापहरु सञ्चालन गर्न सकिनेछ ।

च. यस कार्यक्रममा विनियोजन भएको वजेटको ५ प्रतिशतमा नवढ्ने गरि सहजीकरण, अनुगमन, ईन्धन लगायतमा खर्च गर्न सकिनेछ ।

## ३.२ जडीवुटी तथा गैरकाष्ठ वन पैदावार प्रवर्धन, उद्यम विकास

यस कार्यक्रमको मूल उद्देश्य जडिबुटी उत्पादन प्रशोधन तथा विक्री वितरण सवल र सुद्दढ बनाउंदै स्थानीय स्तरमा आय आर्जन र रोजगारीका अवसरहरुको अभिवृद्धी गर्ने रहेको छ । यस अन्तर्गत आवश्यकता अनुसार निम्न कृयाकलापहरु गरिनेछ ।

क. मौजुदा जडिबुटी खेती भएको क्षेत्रको संरक्षण,ब्यवस्थापन कार्य,

ख. मूल्य अभिवृद्धी गर्न आवश्यक पर्ने संकलन, प्रशोधन र भण्डारण विधि लगायतका प्रवर्धनात्मक कार्यहरुमा सहयोग पुग्ने प्रविधि र क्षमता विकासका कार्यहरु,

ग. स्थानीय स्तरमा कच्चा पदार्थ उपलब्ध भै सञ्चालन हुन सक्ने र भैरहेका लघु उद्यमहरुमा प्रविधि तथा उपकरणहरुमा सहयोग । यसरी सहयोग उपलब्ध गराउँदा निजि क्षेत्रको हकमा प्रस्तावना माग गरी क्षमता र उपयुक्तताको आधारमा कुल लागतको बढीमा ५० प्रतिशत सम्म अनुदान उपलब्ध गराउन सकिने छ ।

घ. यस कार्यक्रममा विनियोजन भएको वजेटको ५ प्रतिशतमा नवढ्ने गरि सहजीकरण,सूचना प्रकाशन, अनुगमन, ईन्धन लगायतमा खर्च गर्न सकिनेछ ।

## ३.३ जडीवुटी तथा गैरकाष्ठ वन पैदावार व्यवस्थापन सम्वन्धि प्रशिक्षण, स्रोत सर्वेक्षण, उत्पादित वस्तुहरूको वजारीकरण, मुल्य अभिवृद्धी सम्वन्धि क्रियाकलाप (प्रशिक्षण)

प्रदेश स्तरमा व्यवसायीक प्रयोजन वा उद्यम विकासमा सम्भावीत गैर काष्ठ प्रजातिहरूको स्रोत सर्वेक्षण, उत्पादित वस्तुहरूको वजारीकरण, मुल्य अभिवृद्धी सम्वन्धि क्रियाकलाप समेट्ने गरी अध्ययन तथा प्रशिक्षण कार्य संचालन गर्नु पर्ने छ । यो प्रशिक्षणबाट जंगलमा रहेका जडिबुटी तथा गैह्रकाष्ठ वन पैदावारको संरक्षण, दीगो व्यवस्थापन तथा बजारिकरण एवं निजी जग्गामा खेती बिस्तारमा योगदान पुग्नेछ ।

सचिव

# परिच्छेद ४

# भू तथा जलाधार व्यबस्थापन कार्यक्रम (३०७०००१५)

भू तथा जलाधार व्यवस्थापनका कार्यक्रम कार्यान्वयन सम्बन्धी कार्यविधि यस परिच्छेदमा उल्लेख गरिएको छ। यस कार्यक्रमका उद्देश्य देहाय बमोजिम रहेका छन् ।

क. भू - वातावरणीय दृष्टिले संवेदनशील, महत्वपूर्ण र प्राथमिकता प्राप्त जलाधार क्षेत्रहरुको एकिकृत व्यवस्थापन गरी जन, धन र पूर्वाधारको क्षतिमा न्यूनीकरण गर्ने ।

ख. जल तथा भूमिको संरक्षणबाट जलको उपलब्धता, भूमिको उत्पादकत्वमा परिमाणात्मक र गुणात्मक वृद्धिगरी जनताको सामाजिक आर्थिक समृद्धिमा योगदान पुर्‍याउने ।

ग. अध्ययन, अनुसन्धानद्वारा जलवायु परिवर्तनकाकारणले परेका र पर्न सक्ने असर आंकलन गरी उपयुक्त प्रविधिको विकास र विस्तार गर्ने ।

## ४.१ कार्यनीति

कार्यक्रमको मुख्य उद्देश्य हासिल गर्नको लागि निम्नलिखित कार्यनीति रहेका छन् ।

क. विभिन्न स्तरका जलाधार (बृहत जलाधार, उपजलाधार, सुक्ष्म जलाधार) उपागम अनुरुप जलाधारहरुको पहिचान, वर्गीकरण र प्राथमिकीकरण गर्ने ।

ख. वर्गीकरणको आधारमा विभिन्न जलाधार व्यबस्थापन योजनाहरू (प्रादेशिक, स्थानिय) बनाइ कार्यान्वयन गर्ने ।

ग. एक जलाधार वहुउपाय:एकिकृत सहभागितामूलक जलाधार व्यवस्थापन प्रकृया अवलम्वन गर्ने

घ. संरक्षण कार्यलाई उत्पादनशील,आयमुलक,एवं वजारमुखी ढाँचामा सञ्चालन गर्ने ।

ङ. हरित क्षेत्रसँग संबन्धित निकाय (वन, कृषि, पशुपालन र जलश्रोत) सँग समन्वय र साझेदारी कायम गर्दै एकीकृत सेवा प्रदान गर्ने ।

च. वृहत जलाधार अनुरुप संस्थागत तथा सांगठनिक विस्तार र सुधार गर्दै जाने ।

छ. चुरे क्षेत्रको जलाधार व्यवस्थापनलाई विशेष प्राथामिकता दिने ।

ज. जलाधार व्यवस्थापनका विविध पक्षहरु बारे प्रचार प्रसार र समन्वय गर्ने ।

झ. जलवायु परिवर्तनका कारणले पर्नसक्ने संभावित जोखिमको आँकलन गरी जलाधार स्तरमा आवश्यक र उपयुक्त अनुकुलन/समानुकुलन एवं विपद व्यवस्थापनका कार्यक्रम सञ्चालन गर्ने ।

ञ. Too much water too little water management को अवधारणा अनुसार विषेशगरि हिउँदको मौसममा too little water भएको समयको लागि सञ्चय, नवीकरण र सतत् उपयोगमा सघाउ पुऱ्याउने कार्यक्रमा विषेश जोड दिने ।

ट. संरक्षणका सम्पूर्ण कार्य र प्रयासहरु उपल्लो भेगको संरक्षण तल्लो भेगको फाइदा भन्ने वैज्ञानिक मान्यताका साथ जिल्लाको उपल्लो जलाधार क्षेत्र र तल्लो जलाधार क्षेत्रमा कार्यक्रमहरु एकिकृत रूपमा संचालन गर्ने ।

ठ. वातावरणीय सेवाको भुक्तानी को लागि उपयुक्त प्रणालीको विकास गरी कार्यान्वयन गर्ने।

सचिव

## ४.२ खरीद र भुक्तानी प्रकृया तथा गुणस्तर नियंत्रण

क. कुनै पनि वस्तु वा सेवा खरीद र भुक्तानी गर्दा सार्वजनिक खरीद ऐन, २०६३, सार्वजनिक खरीद नियमावली, २०६४ प्रदेश आर्थिक कार्यविधि ऐन, २०७४ र प्रदेश आर्थिक कार्यविधि नियमावली २०७५को अधिनमा रही गर्नुपर्नेछ ।

ख. कार्यक्रमको आवश्यकता अनुसार ग्याविन तार जालीको काम गर्दा खिया नलाग्ने,स्पेसिफिकेशन भएको मेशिनवाट वुनिएका Heavy Coated G.I.तार जाली खरीद गर्नु पर्नेछ । जिल्ला दररेट न्युन भै सामाग्री उपलब्ध हुन नसक्ने अवस्था भएमा एक तह माथिको सहमति लिई कानून सम्मत तवरले अन्य विकल्प प्रयोग गर्न सकिने छ ।

ग. निर्माण कार्य स्थलमा सो कार्यक्रमसंग सम्बन्धित विवरणहरु (आयोजनाको नाम, लागत रकम, उपभोक्ता समितिको नाम, ठेगाना, लाभान्वित घरधुरी, कार्यक्रमबाट हुने मुख्य मुख्य उपलब्धीहरू) सर्वसाधारणले देख्ने गरी सार्वजनिक गर्नु पर्नेछ ।

घ. कार्यक्रमको भूक्तानी गर्नु भन्दा पहिले सो कार्यक्रममा भएको खर्चको सार्वजनिक लेखापरीक्षण गरिसकेको प्रतिवेदन प्राप्त भएपछि मात्र भूक्तानी गर्नु पर्नेछ ।

ङ. मासिक खर्चको विवरण सार्वजनिक गर्नु पर्नेछ। सम्भव भए सम्म Website मार्फत समेत सार्वजनिक गर्ने व्यवस्था गर्नु पर्नेछ ।

च. लागत,लाभांश, सहभागिता लगायतका विषयमा सार्वजनिक सुनुवाई गर्ने,कार्यक्रमको भुक्तानी पछि उपभोक्ता समूह सदस्यहरु बीच समन्यायिक बाँडफाँड,मर्मत सम्हार,लगायतका विषयमा अनुगमन गर्नुपर्नेछ ।

## ४.३ कार्यान्वयन विधि

### ४.३.१ आकस्मिक पहिरो व्यवस्थापन तथा नदी खोला नियन्त्रण

आकस्मिक रुपमा आइपर्ने विपदले व्यक्तिको घरवार नै उठिवास हुने अवस्था भई पिडित व्यक्तिले उपभोक्ता समिति वनाई राहत प्राप्त गर्न कठिनाई हुने अवस्थामा पिडित व्यक्तिलाई कार्यालयवाट तत्काल राहत उपलब्ध गराउन यो कार्यक्रम संचालन गरिने छ । आकस्मिक रुपमा आइपर्ने विपदले व्यक्तिको घरवार नै उठिवास हुने अवस्था भई पिडित व्यक्तिले उपभोक्ता समिति वनाई राहत प्राप्त गर्न कठिनाई हुने अवस्थामा पिडित व्यक्तिलाई कार्यालयवाट तत्काल राहत उपलब्ध गराउन यो कार्यक्रम संचालन गरिने छ ।यस अन्तरगत निम्न लिखित कृयापलाप सञ्चालन गर्न सकिने छ।

क. आकस्मिक रूपमा पहिरो जाने तथा नदी कटान हुन सक्ने क्षेत्रहरूको पहिचान गरी सूचीकरण (अभिलेखीकरण) गर्ने,

ख. त्यस क्षेत्रको अवस्था र हुन सक्ने संभावित क्षतिको वारेमा सम्वन्धित निकायहरुबाट सुचना संकलन गरी प्रोफाइल तयार गर्ने,

ग. आकस्मिक रुपमा पहिरो र नदी कटान भई गाउ वस्ती र राष्ट्रिय महत्वका संरचनामा जोखिम हुने अवस्था आएमा तत्काल राहत र न्यूनीकरणको लागि निर्माण सामग्री उपलब्ध गराउने व्यवस्था गर्ने,

घ. भू तथा जलाधार व्यवस्थापन कार्यालयबाट लागत अनुमान तयार गरि सम्बन्धित उपभोक्ता समूह र उद्दारमा खटिएका सुरक्षा कर्मी मार्फत संरक्षण तथा व्यवस्थापन सम्बन्धि संरचना तयार गर्ने,

सचिव

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, GPS लोकेशन, पहिरोको क्षेत्रफल, लाभान्वित घरधुरी रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ४.३.२ ग्रामिण सडकसँग भूसंरक्षण कार्यक्रम

ग्रामीण क्षेत्रहरुमा तिब्रतर रुपमा ग्रामिण सडकको पूर्वाधार निर्माणका कार्यहरुले ठूलो परिमाणमा भू- स्खलन गराएको कारणले जैविक विविधता, भू-उपयोग प्रणाली तथा विविध क्षेत्रमा नकारात्मक असर बढ्दै गईराखेको सन्दर्भमा उक्त कार्यबाट हुनसक्ने जोखिम न्यूनीकरण गर्नु यस कार्यक्रमको मुख्य उद्देश्य रहेको छ। ग्रामीण सडकको भू-स्खलन रोकथामका लागि अवलम्बन गरिने प्रविधिलाई प्रदर्शन स्थलको रुपमा विकास गरी प्रवर्धन गरिनेछ र विकसित प्रविधिलाई क्रमशः प्रदेश, स्थानीय तह सम्म हस्तान्तरण गरिनेछ ।

यस कार्यक्रममा वायो ईन्जिनियरिङ्ग प्रविधिबाट सडकको दायाँवायाँ हरियाली प्रवर्धन तथा भिरालो पाखो संरक्षणका लागि जैविक र संरचनाात्क संरचना निर्माण, सडक आसपासका वस्ती र मानवीय जोखिमयुक्त स-साना पहिरो उपचार, गल्छि खोल्सी नियन्त्रण तथा सो सम्बन्धी कुलो नाला निर्माण, सुरक्षित भल पानीको निकास जस्ता कार्यहरु पर्दछन् भने यस कार्यक्रममा सडक निर्माण वा स्तरोन्नतिका उद्देश्यले निर्माण हुने सडकको नाला निर्माण, रिटेनिंगवाल निर्माण जस्ता कार्यहरु यसमा समावेश हुने छैन। यस अन्तरगत निम्नानुसारका कृयाकलाप सन्चालन गर्न सकिने छ ।

क. ग्रामिण सडकको दायाँ बायाँ हरित प्रविधिको विकास, गल्छी पहिरो रोकथाम, भलपानीको व्यबस्थापन गर्दै एकीकृत जलाधार व्यबस्थापन गर्ने,

ख. भू तथा जलाधार व्यबस्थापन कार्यालय मार्फत कार्यक्रमको डिजाइन, सर्भे, लागत इष्टिमेट, संझौता, कार्यान्वयन तथा अनुगमन गर्ने,

ग. गाउँघरमा निर्माण गरिने सडक किनाराहरूको संरक्षण गर्न बायोइन्जिनियरिंग प्रविधी (टेवा पर्खाल, पेलिसेड, चेकड्याम, रिपर्‌याप, घाँस तथा वाँस रोपण, अम्रिसो रोपण लगायतका कृयाकलाप) संचालन गरिनेछ ।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, एलाइनमेण्ट, लाभान्वित घरधुरी, रोजगारी सिर्जना र खर्च रकम साथै हरेक सेगमेण्ट अनुसार गरेको कामको विवरण र परिमाण आदि उल्लेख गर्नु पर्नेछ।

### ४.३.३ नदी तथा खोला किनार व्यवस्थापन

नदी खोला किनारा व्यवस्थापनका लागि नदी किनारमा संरचनाको निर्माण गर्दा नदी बहावको लागि प्राविधिक रुपले आवश्यक पर्ने नदीको बहाव क्षेत्र नघटाई संरचना निर्माण गरिनु पर्दछ । यो कार्य संचालन गर्दा बायो इन्जिनियरिङ्ग प्रविधिलाई बढी प्राथमिकता दिनु पर्छ । साथै स्थानीय उपभोक्ताको सहभागिता र सहकार्य लाई प्राथमिकता दिई सञ्चालन गर्नु पर्नेछ। बायोइन्जिनियरिंङ्ग बाहेकका संरचना जस्तै तट्बन्ध, स्पर र चेकड्याम निर्माण गर्नु पर्ने भएमा नदी, खोलाको बहाव क्षेत्रकोलागि आवश्यक ठाउँ छोडेर नदी र खोलाको अर्को किनारामा कटान नबढ्ने गरी मात्र निर्माण गर्नु पर्नेछ र तटबन्धको संरचना निर्माण गर्दा प्राविधिक रुपमा आवश्यक पर्ने लंचिंङएप्रोन, डाइक र स्परहरुको अनिवार्य व्यवस्था गर्नु पर्नेछ । निर्मित संरचनाको दीगो संरक्षण गर्नको लागि नदीको दुवै किनारमा अनिवार्य हरित पेटिका निर्माण गर्नु पर्नेछ। यस अन्तरगत निम्नानुसारका कृयाकलापहरु सन्चालन गरिने छ ।



सचिव

क. नदी तथा खोलाको वहावलाई नियमन गरी किनारमा हुने अनियन्त्रित कटान र Overflow वाट वस्ती, खेतीयोग्य जमिन, नदी उकास जग्गा र महत्वपुर्ण संरचना संरक्षण गर्ने,
ख. नदी तथा खोला किनारा स्थिरीकरण तथा व्यबस्थापन कार्यक्रम सञ्चालनगर्दा छनोट गरिएका नदी प्रणालीमा नदी प्रणाली एकीकृत श्रोत व्यबस्थापनका कार्यक्रमहरू सञ्चालन गर्ने,
ग. नदी किनारा व्यबस्थापनका लागि नदी किनारामा संरचनाको निर्माण गर्दा नदी वहावको लागि प्राविधिक रुपले आवश्यक पर्ने नदीको वहाव क्षेत्र नघटाइ गर्ने,
घ. निर्मित संरचनाको दिगो संरक्षण गर्नको लागि नदीको दुवै किनारामा स्पर, डाइक तटवन्धन, वायोइन्जिनियरिंग, हरित पटांका लगायतका संरक्षणका कृयाकलाप गर्ने ।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, लाभान्वित घरधुरी, रोजगारी सिर्जना र खर्च रकम साथै हरेक सेगमेण्ट अनुसार गरेको कामको विवरण र परिमाण आदि उल्लेख गर्नु पर्नेछ।

### ४.३.४ संवेदनशिल जलाधार क्षेत्र संरक्षण

संवेदनशिल जलाधार क्षेत्रको आवश्यकता र सो क्षेत्रसंग जोडिएको उपल्लो तहको पानी ढलोले घेरीएको जलाधार क्षेत्रको संवेदनशिलतालाई सम्बोधन गर्ने गरी मूलभूत रुपमा एकीकृत जलाधार व्यवस्थापनको माध्यमद्वारा भू-स्खलनमा न्यूनीकरण गर्दै कृत्रिम रुपमा पानीको मात्रालाई बढोत्तरी गर्नु कार्यक्रमको मूख्य उद्देश्य रहेको छ । यस अन्तर्गत निम्न क्रियाकलापहरु सञ्चालन गर्न सकिने छ।

क. स्थानीय जनप्रतिनिधि तथा सरोकारवालहरुसंग अन्तरकृया ।
ख. उपल्लो तटीय र तल्लो तटीय अन्तरसम्बन्धको अवधारणा अनुसार यो कार्यक्रम संचालन गर्ने,
ग. शहरी क्षेत्र लाई प्रभावित पार्न सक्ने जलाधार (Up stream) हरुको पहिचान गरी संवेदनशिलता र प्राथमिकरण गर्ने,
घ. यस्ता जलाधार क्षेत्रबाट शहरले प्राप्त गर्ने वातावरणीय सेवाको निरन्तरताको लागि आवश्यक पर्ने भू-संरक्षण तथा जलाधार ब्यवस्थापनका कार्यक्रम संचालन गर्ने,
ङ. स्थानीय तहसँग समन्वय गरी भू तथा जलाधार ब्यवस्थापन कार्यालयबाट संवेदनशिल तथा शहरी जलाधार क्षेत्रको पहिचान गर्ने,
च. संरक्षण समूह पहिचान र सशक्तीकरण ।
छ. थिग्रीकरण रोकथाम संरचना निर्माण ।
ज. जल प्रवाहको व्यवस्थापनको लागि हरित प्रविधि विकास ।
झ. पानी श्रोतको अवस्था सर्वेक्षण अध्ययन र श्रोत संरक्षण ।
ञ. वृक्षारोपण तथा पुन रोपण ।
ट. संरक्षण पोखरी निर्माण तथा व्यवस्थापन ।
ठ. पानीढल बर्षाझरी तथा वहाव संकलन पोखरी ।
ड. गेग्रान संकलन तथा गल्छीवहाव नियन्त्रणको लागि चेक ड्याम निर्माण ।
ढ. क्षतीग्रस्त भूमी पुनरुत्थान तथा खेतीवारी संरक्षण ।
ण. भू उपयोग प्रविधि विकास तथा सचेतनामूलक कार्यक्रम ।

त. वातावरणीय सेवा, जलाधारीय सेवा भुक्तानी प्रणालीको विकास ।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, लाभान्वित घरधुरी, रोजगारी सिर्जना र खर्च रकम साथै हरेक क्षेत्र वा ठाउँ (GPS Location) अनुसार गरेको कामको विवरण र परिमाण आदि उल्लेख गर्नु पर्नेछ।

### ४.३.५ कृषि वन प्रणालीका लागि डालेघाँस, फलफूलका विरुवा वितरण

यस कार्यक्रम अन्तर्गत आवश्यक स्थानमा बृक्षारोपण गर्नको लागि स्थानीय उपभोक्ताहरुलाई निजि/सार्वजनिक जग्गामा डालेघाँस, फलफूलका विरुवा बृक्षारोपण गर्न उपभोक्ताको चाहना तथा भू-संरक्षण को हिसावले महत्वपूर्ण गुणस्तरीय विरुवा रोपण तथा वितरण गरिने छ ।
भूमिको उत्पादन क्षमतामा ह्रास आउन नदिन तथा भू-क्षमताको आधारमा भूमिको विकास एवं सुधार गरि भूमि उत्पादकत्व संरक्षण गर्न डालेघाँस, फलफूलका विरुवा वितरण गरिने छ । यस अन्तर्गत निम्न कार्यक्रमहरु सञ्चालन गरिने छ ।

क. क्षतिग्रस्त भूमी पुनरुत्थान कार्यक्रम ।
ख. सिमान्त, सार्वजनिक तथा नदी उकास जग्गा संरक्षण र सदुपयोग कार्यक्रम ।
ग. डालेघाँस, भुईघास, फलफूल रोपण कार्यक्रम ।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, लाभान्वित घरधुरी,रोजगारी सिर्जना र रोपेको वा वितरण गरेको बिरुवाको जात र संख्या वृक्षारोपणको क्षेत्रफल, खर्च रकम र गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ४.३.६ पानी मुहान संरक्षण / पोखरी निर्माण कार्यक्रम

प्राकृतिक, मानवीय तथा जलवायुजन्य कारणले यस प्रदेशका विभिन्न स्थानहरुमा पानी श्रोतहरु सुक्दै गईरहेको अवस्थालाई सम्वोधन गर्न यो कार्यक्रम तय गरिएको हो । सुख्खा खडेरी न्यूनीकरणका साथै पानीको मूलहरुको संरक्षण गर्न निम्न कार्यहरु गरिने छन्।

क. परम्परागत पोखरीहरुको संरक्षण गर्ने, पुरिएका पोखरी उत्खनन गर्ने, गाउँघरको बाटोमा बग्ने भललाई पोखरी बनाई संकलन गर्ने, पोखरी बनाई वढी पानी आउदा खोला खोल्सीमा सुरक्षित निकास बनाउने, खोल्सीमा बग्ने पानी आवश्यकता अनुसार खेतबारीमा र खेतबारीको बढी पानी सुरक्षित निकास चाहिदा खोल्सी जाने गरी खेत बारीको शिरानमा कुलो पोखरीहरु बनाउने।
ख. पोखरी निर्माणको लागि सम्भावित स्थान पहिचान गर्न सम्बन्धित स्थानीय तह र उपभोक्ता समूहसँग समन्वय गरि स्थान छनौट गर्ने,
ग. स्थान छनौट गर्दा सार्वजनिक ऐलानी, पर्ति क्षेत्र, परम्परागत साना पोखरी भएका क्षेत्रलाई प्राथमिकता दिने, त्यस्तो स्थान नभएमा सामुदायिक वन, राष्ट्रिय वन क्षेत्रमा रुखविरूवाहरू नभएको तथा निजि जग्गामा समेत सिचाई पोखरी निर्माण गर्न क्षेत्र छनौट गर्ने,
घ. परम्परागत कुवा, ढुङ्गे धारा र पानिका श्रोतहरुको सरक्षण गर्ने ।
ङ. पानी श्रोतको शुक्ष्म जलाधार क्षेत्रमा तारबार गरी वृक्षारोपण गर्ने ।
च. कार्यक्रम संचालन गर्न निम्न उपायहरु अवलम्वन गरिने छ ।

खानेपानीको योजनामा पाइप, टंकी, धारामात्र होइन पानीको मूल र मुहान संरक्षणको कार्य पनि समाबेश गर्न सकिने छ । पानी मुहानको जलाधार क्षेत्रमा सल्लाको एकल प्रजाती वन भएका चौडापाते मिश्रित वनको रुपमा क्रमिक रुपमा रुपान्तरण गर्न डिभिजन वन कार्यालय संग समन्वय गर्ने, सामुदायिक वन भए कार्य योजनामा समावेश गरी योजना बनाउने तथा सामुदायिक वन, स्थानीय तह र डिभिजन वनको सहकार्यमा कार्यक्रम संचालन गरिने छ ।
नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, इन्टेकको साइज(घनमि,टर) पाइपलाइनको लम्बाइ र पाइपको साइज, रिजर्भ्वायरको क्षमता (घनमिटर), धारा संख्या, लाभान्वित घरधुरी, रोजगारी सिर्जना र खर्च रकम र गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ४.३.७ गल्छी, पहिरो तथा खहरे रोकथाम

यो कार्यक्रम प्राथमिकता प्राप्त उपजलाधार र नदी प्रणालीमा सञ्चालन गरिनेछ । गल्छी, पहिरो तथा खहरे लगायतका क्षेत्रमा भु संरक्षणका कृयाकलाप सञ्चालन गर्दा माथिल्लो तटीय क्षेत्र वा चुरे पहाडको भिरालो क्षेत्रमा हुने सतही रिल र गल्छि जस्ता भु क्षयको उपचार बायो इन्जिनियरिंग प्याकेजबाट गर्नुपर्नेछ ।
यस कार्यक्रममा तपसिलका उपचार विधी प्रयोग गर्न सकिनेछः

क. वनस्पति तथा स साना संरचना, पानी निकास
ख. कम खर्चिलो भू प्रविधि
ग. Dry stone, loose stone, brush stone checkdam
घ. Fascine, pallisade, wattling, layering, rip rap, hedge row
ङ. Contour trenching, contour bunding, jute netting
च. स साना इन्जिनियरिंग संरचना
छ. घाँस रोपण, बाँस रोपण, वृक्षारोपण, हाँगा रोपण आदि,
ज. यस कार्यक्रम स्थानीय तहसँग समन्वय गरी उपभोक्ता समिति मार्फत सञ्चालन गर्ने,
झ. सर्भे डिजाईन तथा ल.ई.: यसमा स्थलगत नक्सा(लोकेशन म्याप), प्रभावित क्षेत्रको भु उपयोग देखीने खेस्रा नक्सा,विभिन्न भागको लम्बाइ, चौडाइ, गहिराई, माटो तथा भू बनौट, प्रकोपको प्रकृति(Mud flow, debris flow, Gulley Erosion size etc) तथा प्रभावित हुने घर परिवार संरचना वा सुरक्षित हुने जग्गा जमीनको क्षेत्रफल जस्ता विषयहरु समावेश हुने छन् ।
ञ. इन्जिनियरिङ्ग संरचना निर्माण र संरक्षण वृक्षारोपण गरिनेछ ।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, गल्छीको साइज (लम्वाइ चौडाई र गहिराई), क्रियाकलापको नाम र परिमाण, संरक्षण भएको क्षेत्रफल, लाभान्वित घरधुरी, रोजगारी सिर्जना र खर्च रकम र गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ४.३.८ भू तथा जलाधार संरक्षण संबन्धी कार्यक्रम

यस कार्यक्रमबाट भूसंरक्षण तथा जलाधार व्यवस्थापन सम्बन्धी- जलाधार /उपजलाधार प्राथमिकीकरण तथा योजना तर्जुमा र जनचेतना अभिबृद्धि गर्ने उद्देश्यले प्रचार प्रसार, अन्तरक्रिया गोष्ठि तालिम आदि संचालन गरिने छ । यस अन्तर्गत निम्न लिखित क्रियाकलाप सञ्चालन गरिने छ ।

क. पर्चा पम्पलेट– रेडियो, टेलिभिजन होर्डिङ बोर्ड आदि

ख. वार्षिक प्रतिवेदन, दिवस समारोह, जिल्लाको पंचवर्षीय योजना निर्माण आदि

ग. वन, वातावरण तथा भू संरक्षण अन्तर्गत संरक्षण, व्यवस्थापन, वन अतिक्रमण, वन डढेलो नियन्त्रण लगायतका कार्यक्रमहरु रेडियो, टेलिभिजनबाट प्रसारण गर्नुपरेमा रेडियो टेलिभिजनसँग संझौता गरी कार्यक्रम संचालन गर्न सकिनेछ ।

घ. जलाधार /उपजलाधार प्राथमिकीकरण तथा योजना तर्जुमा

जलाधार/ उपजलाधार प्राथमिकीकरण तथा योजना तर्जुमाको लागि निम्न कार्यविधि अपनाईनेछ ।

क. जलाधार/ उपजलाधार प्राथमिकीकरण गर्दा बृहत् जलाधार ब्यावस्थापन केन्द्र र सम्बन्धित जिल्ला समन्वय समिति संग समन्वय गरी भू उपयोग, भू प्रणाली, भू गर्भ, भिरालोपना जस्ता भू जैविक तथा जनघनत्व, सामाजिक एवं आर्थिक पक्षहरुको मानकको आधारमा जलाधार तथा उपजलाधार प्राथमिकीकरण गर्ने ।

ख. संवेदनसिल जलाधार ब्यवस्थापन भू क्षय, पहिरोग्रस्त क्षेत्र, जोखीम क्षेत्र, संवेदनशिल क्षेत्रको उपचार (Hot spot ) तथा महत्वपुर्ण जलाधार क्षेत्र (जस्तो शहरी जलाधार) जलविद्युत जलाधार,पर्यावरणीय जलाधार,सिमसार क्षेत्रको जलाधार ब्यवस्थापन लाई जलाधार तथा उपजलाधार क्षेत्र प्राथमिकीकरणमा आधार लिने ।

ग. साविक भू तथा जलाधार संरक्षण विभागद्धारा प्रकाशित Sub-watershed Priotization Guidelines तथा Watershed Characterizations Atrtributesहरुको उपयोग गर्न सकिने छ ।

घ. प्राथमिकतामा परेको जलाधार उपजलाधारहरुको स्थानिय जनसमुदाय तथा जनप्रतिनिधिहरुको सहभागितामा सामाजिक, आर्थिक तथा प्राकृतिक स्रोतहरुको स्थिति पत्ता लगाई जलाधार संरक्षण तथा ब्यावस्थापन सम्बन्धि आवश्यकता पहिचान गरी जलप्रवाह प्रणाली, भू उपयोग, भू प्रणाली, भू गर्भ , भिरालोपना जस्ता भू जैविक तथा जनघनत्व, सामाजिक आर्थिक पक्षहरुका आधारमा जलाधार ब्यावस्थापन योजना तयार गर्ने ।

ङ. यसरी जलाधार ब्यावस्थापन योजना तयारी गर्दा भू क्षमता र भू उपयोका साथै भू क्षय, पहिरोग्रस्त क्षेत्र, जोखीम क्षेत्र, संवेदनशिल तथा जोखिमयुक्त (Hazard prone),क्षेत्रको पहिचान तथा जल भण्डारण तथा पुनर्भरण, सुख्खाग्रस्त क्षेत्रमा पानी श्रोत संरक्षण, पोखरी, पानी सोसाउने कुलो, कन्टुर ट्रेन्च, रनअफ हारभेष्टीङ्ग ड्यामजस्ता कार्यक्रम तथा कृयाकलापहरुको योजना तयार गरिने छ।

च. साथै जलाधार उपजलाधार योजनामा ग्रामीण सडकसंग भू संरक्षण, सिचाइ कुलो जस्ता वातावरण मेत्री विकास, जलबायु अनुकुलन तथा समानुकुलन, लैगिक संवेदनसिल तथा समावेसिता जस्ता अन्तरसम्बन्धित पक्षहरुलाई समेटी जलाधार उपजलाधार ब्यावस्थापन योजना तयार गर्ने

छ. जलाधार उपजलाधार योजना तर्जुमाले निर्देशित गरेका कार्यक्रमहरुको आवधिक तथा वार्षिक योजना तर्जुमा गरी कार्यान्वयन गर्ने

कार्यालय अन्तर्गत रहेका मौजुदा जनशक्तिहरुको परिचालन गर्दै जनशक्ति न्यून भएको अवस्थामा प्रचलित ऐन, नियमानुसार सेवा प्रदायक बाट समेत कार्यक्रम कार्यान्वयन गर्न सकिनेछ ।वार्षिक प्रतिवेदन तयार गर्दा कार्य प्रगतिको मासिक, आवधिक र वार्षिक प्रतिवेदन तथा वार्षिक संरक्षण पार्श्वचित्र (Activity Profile) तोकिएको ढाँचामा तयार गरिनेछ।

# परिच्छेद ५

## पर्यटन विकास तथा प्रवर्द्धन कार्यक्रम (३०७०००१३)

यस प्रदेशको प्राकृतिक, ऐतिहासिक, धार्मिक, पुरातात्विक स्रोतहरुको संरक्षण र दीगो व्यवस्थापन मार्फत पर्यटन क्षेत्रको विकास र प्रवर्द्धन गरी 'समृद्ध प्रदेश, खुसी जनता' को प्रादेशिक लक्ष्य पूरा गर्न योगदान पुऱ्याउने उद्देश्यले यस प्रदेशलाई सुरक्षित र आकर्षित पर्यटकीय गन्तव्यको रुपमा विकास गर्न यस आर्थिक वर्षमा संचालन गरिने पर्यटन क्षेत्रका कार्यक्रमलाई यस परिच्छेदमा समावेश गरिएको छ ।

### ५.१ सीप विकास तथा जनचेतना तालिम तथा गोष्ठी सम्बन्धी खर्च

यस कार्यक्रमको मूल उद्देश्य मन्त्रालय र मातहतका निकायमा कार्यरत कर्मचारी तथा सरोकारवालाहरुको क्षमता विकास मार्फत प्रादेशिक पर्यटन क्षेत्रको विकासमा टेवा पुऱ्याउने रहेको छ। यस कार्यक्रम अन्तरगत निम्न क्रियाकलापहरु संचालन गरिनेछ।

| क्र सं | तालिमको नाम | सहभागी तथा छनौटको आधार |
|---|---|---|
| १ | हस्पिटालिटि म्यानेजमेन्ट तालिम | यो तालिम यस प्रदेश भित्र रहेका पर्यटक स्तरीय होटलमा कार्यरत कर्मचारी, पथप्रदर्शक र होमस्टे व्यवस्थापक तथा होमस्टेमा कार्यरत कर्मचारीहरुलाई दिइनेछ। |
| २ | पर्यटन गाइड तालिम, | यो तालिम यस प्रदेश भित्रका प्रमूख पर्यटकीय गन्तव्यहरुमा स्थानीय पर्यटक गाइड तयार गर्न सम्बन्धित सरोकारवालासँग समन्वय गरी दिइनेछ। |
| ३ | भाषागत तालिम | यो तालिम यस प्रदेश भित्रका पर्यटक गाइडको रुपमा काम गरिरहेका वा पर्यटक गाइडको तालिम लिएकाहरुलाई सम्बन्धित सरोकारवालासँग समन्वय गरी दिइनेछ। |
| ४ | होमस्टे व्यवस्थापन तालिम | यो तालिम यस प्रदेश भित्र रहेका पुराना र नयाँ दुबै होमस्टे संचालक र व्यवस्थापकहरुलाई छनौट गरी दिइनेछ। तालिमको प्याकेजमा अवलोकन भ्रमण आवश्यक पर्ने भए सो समेत गर्न सकिनेछ। |
| ५ | कर्मचारीको क्षमता अभिवृद्धि तालिम | यो तालिम पर्यटन प्रवर्द्धन र विकास सम्बन्धी काममा संलग्न यस मन्त्रालय र मातहतका निकायमा कार्यरत कर्मचारीहरुलाई लक्षित गरी दिइनेछ । तालिमको प्याकेजमा अवलोकन भ्रमण आवश्यक पर्ने भए सो समेत गर्न सकिनेछ। |
| ६ | तीन पुस्ते अनुभव प्रशिक्षण कार्यक्रम | यो प्रशिक्षण कार्यक्रम परम्परागत ज्ञान, खानपान, भेषभुषा, रीति रिवाज आदिको संरक्षण एवम् पर्यटन प्रवर्द्धनमा योगदान पुग्ने गरी स्थानीय बालबालिकालाई लक्षित गरी स्थानीय प्रौढहरुबाट पाठ योजना बमोजिम प्रशिक्षण दिइनेछ। सकभर ग्रामीण पर्यटकीय क्षेत्र एवम् होमस्टे संचालन भएका स्थानहरुका विद्यार्थीहरु तथा स्थानीय युवा (१५ देखी २५ वर्ष उमेर समूह)लाई छनौट गरी प्रशिक्षण दिइनेछ। |

सचिव

प्रदेश सरकार प्रदेश नं ५ उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय बुटवल, रुपन्देही

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य

ख. छलफल र तालिमका विषयवस्तु,

ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,

घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,

ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति,

च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख

## ५.२ कार्यक्रम खर्च

### ५.२.१ प्रादेशिक पर्यटन सम्बन्धी कानून निर्माण

यस कार्यक्रमको मूल उद्देश्य प्रदेश भित्र पर्यटन प्रवर्द्धन तथा पर्यटकीय सेवा प्रवाहलाई नियमित, व्यवस्थित र मर्यादित बनाउन आवश्यक नियम, कार्यविधि र निर्देशिकाहरु निर्माण गर्नु रहेकोछ। यस कार्यक्रम अन्तरगत निम्न क्रियाकलापहरु संचालन गरिनेछ।

क. पर्यटन सम्बन्धी नियमावली, निर्देशिका र कार्यविधिको निर्माण,

ख. होमस्टे सञ्चालन तथा अनुदान मापदण्ड तयारी,

ग. पर्यटन विकास परिषद गठन सम्बन्धी गठन आदेश तयारी,

घ. पर्यटन प्रवर्द्धन प्याकेज विकास अध्ययन तथा प्रकाशन,

उल्लिखित कार्यक्रम गर्नका लागि राय संकलन, बैठक, परामर्श सेवा, गोष्ठी, छपाइ सम्बन्धी कार्यमा विनियोजित रकम खर्च गर्न सकिनेछ ।

### ५.२.२ पर्यटकीय सेवा दर्ता नवीकरण

पर्यटकीय सेवाहरु ट्राभल/ ट्रेकिङ एजेन्सीको दर्ता, नवीकरण, नियमन, पर्यटक स्तरीय होटल लाउन्ज, होमस्टे दर्ता, नवीकरण र नियमन गर्ने कार्य प्रचलित कानून बमोजिम उद्योग, वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालय तथा तोकिएका निकायहरुबाट प्रवाह गरिनेछ ।

### ५.२.३ प्रचार/प्रसार कार्यक्रम

यस कार्यक्रमको मूल उद्देश्य प्रदेश भित्र आन्तरिक र बाह्य पर्यटकहरुलाई आकर्षित गर्नु रहेको छ। यस अन्तर्गत निम्न क्रियाकलापहरु सञ्चालन गरिनेछ।

१. प्रदेश नं. ५ को पर्यटन प्रवर्द्धन डकुमेन्ट्री तयारी
   सेवा प्रदायक संस्था छनौट गरी प्रमुख पर्यटकीय गन्तव्य र तिनीहरुको बिशेषतालाई लाई समेटेर डकुमेन्ट्री तयार गर्ने।



सचिव

२. पर्यटकीय गन्तव्यहरुको सूचना सहितको सामग्री तयारी प्रकाशन तथा वितरण

पर्यटकीय गन्तव्यहरुको सूचना सहितको (बाटो, दुरी, यातायात, बसाई, खानपान, मौसम, पर्यटकीय क्रियाकलाप र सम्बन्धित पर्यटकीय स्थानको महत्व आदि) सामग्री तयार गरी प्रकाशन गरिनेछ ।

३. आन्तरिक पर्यटन प्रचार प्रसार

छापा माध्यम र विद्युतीय माध्यमबाट पर्यटकीय स्थानहरुको प्रचार प्रसार गरिनेछ ।

४. बाह्य पर्यटन प्रचार प्रसार

छापा माध्यम र विद्युतीय माध्यमबाट पर्यटकीय स्थानहरुको प्रचार प्रसार गरिनेछ .

५. ट्राभल्स मार्ट कार्यक्रम

ट्राभल्स एजेन्सीहरुले प्रदान गर्ने पर्यटकीय सेवा तथा सामाग्रीहरुको प्रचार प्रसार गर्न ट्राभल्स एजेन्सीहरुलाई सहभागि गराई प्रर्दशनी कार्यक्रम सञ्चालन गरिनेछ।

६. पर्यटन महोत्सव कार्यक्रम

प्रदेश नं ५ को पर्यटन व्यवसायी संघ संस्थाहरुसँग पर्यटन महोत्सवको आयोजना गर्ने सम्बन्धी प्रस्ताव माग गरी मूल्याङ्कन गरी उपयुक्त प्रस्ताव छनौट गर्ने र छनौट गरेको प्रस्ताव अनुसारका गर्नुपर्ने क्रियाकलापका लागि आवश्यक पर्ने रकम मध्ये पर्यटन व्यवसायी र मन्त्रालयबीच आपसी समझदारीबाट लागत साझेदारीबाट कार्यक्रम संचालन गर्ने।

७. पर्यटन ब्राण्डको तयारी र प्रचार प्रसार

प्रदेश नं ५ को पर्यटकीय बिशेषताहरु समेटी प्रदेशको ब्राण्ड तयार गरी छापा माध्यम र विद्युतीय माध्यमबाट पर्यटकीय स्थानहरुको प्रचार प्रसार गरिनेछ ।

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा पर्यटकीय पहिचान झल्काउने लोगो, होलोग्राम, स्टीकर लकेट, आदि तयारी र वितरण सूचना म्याप, डिजिटल नक्शा, क्यालेण्डर, ब्रोसर, पोस्टर, पम्पलेट, होर्डीङ बोर्ड, वाल पेन्टीङ, टोपी, ईलेक्ट्रोनिक संचार, पत्रपत्रिका बुलेटिन, वेबसाइट, सामाजिक संजाल आदिको माध्यमबाट राष्ट्रिय/अन्तर्राष्ट्रिय स्तरमा प्रचार प्रसार गर्ने विषयहरु समेत समेटिनेछ ।

उल्लेखित कार्यक्रमहरु मन्त्रालयको जनशक्तिले सम्भव भएमा आफै र अन्यथा प्रचलित कानून बमोजिम सेवा प्रदायक मार्फत गर्न सकिनेछ।

## ५.३ सार्वजनिक निर्माण पूँजीगत खर्च

### ५.३.१ ऐतिहासिक तथा धार्मिक मन्दिर आश्रमहरु/मस्जिद/संरक्षण एवम् धार्मिक पर्यटन पूर्वाधार विकास

यस कार्यक्रमको मूल उद्देश्य प्रदेश भित्र धार्मिक, सँस्कृतिक, ऐतिहासिक मठ, मन्दिर, आश्रमको संरक्षण गरी धार्मिक पर्यटन प्रवर्द्धन गर्नु रहेको छ। यस कार्यक्रम अन्तरगत निम्न क्रियाकलापहरु संचालन गरिनेछ।

१. माईकाथान मन्दिर पर्यटकीय पूर्वाधार निर्माण मालारानी-७ अर्घाखाँची,
२. धारापानी धार्मिक क्षेत्रमा पार्कसहित भौतिक पूर्वाधार निर्माण,
३. स्वर्गद्धारी मन्दिरको भौतिक पूर्वाधार निर्माण क्रमागत,
४. रुरुधामको क्षेत्र र रिडीधामको पर्यटकीय पूर्वाधार निर्माण पाल्पा गुल्मी,
५. मर्चावारीमाई पर्यटकीय क्षेत्र सौन्दर्यीकरण तथा पूर्वाधार विकास,

६. कैलाश आश्रम धाम पर्यटकीय पूर्वाधार तथा सौन्दर्यीकरण वाणगंगा कपिलवस्तु,
७. समयमाई ऐतिहासिक धार्मिक पर्यटकीय स्थल संरक्षण महराजगंज-७ कपिलवस्तु,
८. शिवपुर पल्टा पर्यटन पूर्वाधार विकास महराजगंज-१ कपिलवस्तु,
९. सिद्धबाबा पर्यटकीय स्थल सौन्दर्यीकरण चन्द्रकोट ७,
१०. सौनिबाबा पर्यटकीय स्थल सौन्दर्यीकरण शिवराज ५ कपिलवस्तु,
११. विन्दवासिनी मन्दिर संरक्षण तथा पर्यटकीय शिव मन्दिर पूर्वाधार निर्माण शितगंगा ५ गल्धा अर्घाखाँची,
१२. खडक भवानीकोट संरक्षण मदाने ४ पुर्कोट गुल्मी,
१३. महामृत्यूञ्जय शिवआसन मन्दिर पर्यटकीय पूर्वाधार निर्माण बगनासकाली ८ पाल्पा,
१४. देवस्थान मन्दिर पर्यटकीय पूर्वाधार निर्माण बगनासकाली ९ पाल्पा,
१५. पर्यटकीय थानपति मन्दिर संरक्षण छत्रदेव ६ अर्घाखाँची,
१६. पाल्पा भैरवस्थान पर्यटन पूर्वाधार विकास,
१७. रिब्दिकोट पर्यटकीय पूर्वाधार रिब्दिकोट ५ पाल्पा,
१८. अर्घ भगवती मन्दिरमा पर्यटकीय पूर्वाधार विकास सन्धीखर्क न पा अर्घाखाँची,
१९. समयमाई पर्यटकीय पूर्वाधार विकास मायादेवी ८ कपिलवस्तु,
२०. ईश्वरी देवालयको पुनर्निमाण तथा प्रतिक्षालय निर्माण छत्रदेव १ चिदिका ठुलापोखरा,
२१. सालिमदेहमा पर्यटकीय पूर्वाधार निर्माण मुसीकोट न पा ८ गुल्मी,
२२. जन शिवालय मन्दिरमा धार्मिक पर्यटन प्रवर्द्धन नौविसे बगनासकाली गा पा २ पाल्पा,
२३. बालपुरी आश्रममा पूर्वाधार निर्माण सुस्ता गा पा १ छिपनी, नवलपरासी,
२४. हुँगी पर्यटकीय पूर्वाधार विकास रम्भा १, पाल्पा

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार भएको हकमा योजना वा प्रतिवेदनले तोकेको प्राथमिकताका आधारमा सम्बन्धित सरोकारवालाहरुको सहभागितामा क्रियाकलापहरु छनौट गरेर लागत अनुमान तयार गरी कानून बमोजिम सकभर उपभोक्ता समिति मार्फत कार्यान्वयन गर्नु पर्नेछ। गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार नभएको हकमा सर्भे, डिजाइन, लागत अनुमान तयार गरी माथि उल्लेख गरे बमोजिम गरिनेछ । यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गर्न सकिनेछ।

क. मठ, मन्दिर धर्मशाला निर्माण, जिर्णोद्धार र संरक्षण,
ख. ती स्थान सम्मको पहुँच मार्ग मर्मत तथा निर्माण, परिसरमा बगैचा तथा पार्क निर्माण,
ग. आवश्यकता अनुसार सोलार, बिजुली, बत्ति र पिकनीक स्पटको व्यवस्था
घ. सूचना केन्द्र निर्माण, चमेना गृह, विश्राम गृह, शौचालय, मौलिकता झल्कने भौतिक संरचना आदि पूर्वाधार निर्माण,
ङ. सूगन्धित र सजावट हुने प्रजातीको फूलवारी एवम् सदाबहार बिरुवा र फलफूलका बिरुवा रोपण आदि।
च. यस्तै प्रकृतिका अन्य आवश्यक क्रियाकलापहरु ।

उपर्युक्त कार्यक्रमहरु कार्यान्वयन गर्दा नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने, वन क्षेत्रको हकमा सम्बन्धित स्वीकृत कार्ययोजनालाई आधार बनाउने वा माथिल्लो निकायबाट स्वीकृति लिने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ। कार्य सम्पन्न पश्चात सेवा संचालन निरन्तरता दिने र यस्ता सार्वजनिक सम्पत्तिहरु संरक्षणको समेत सुनिश्चितता हुने गरी सम्बन्धित संस्था वा निकायलाई हस्तान्तरण गर्नुपर्नेछ।

५.३.२ संग्रहालय निर्माण कार्यक्रम

यस कार्यक्रमको मूल उद्देश्य ऐतिहासिक एवम् पूरातात्विक महत्वका वस्तुहरुको संरक्षण गरी पर्यटन प्रवर्द्धन गर्नु तथा सांस्कृतिक इतिहासको जगेर्ना गर्नु रहेकोछ। यस कार्यक्रम अन्तरगत निम्न क्रियाकलापहरु संचालन गरिनेछ।

क. तिलामा जनयुद्ध स्मृति संग्रहालय रोल्पा,
ख. थवाङ्ग युद्ध संग्रहालय,
ग. ऐतिहासिक खाँचीकोट दरबार संरक्षण एवम् पर्यटकीय पूर्वाधार निर्माण सन्धिखर्क ७, अर्घाखाची

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार भएको हकमा योजना वा प्रतिवेदनले तोकेको प्राथमिकताका आधारमा सम्बन्धित सरोकारवालाहरुको सहभागितामा क्रियाकलापहरु छनौट गरेर लागत अनुमान तयार गरी कानून बमोजिम सकभर उपभोक्ता समिति मार्फत कार्यान्वयन गर्नु पर्नेछ। गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार नभएको हकमा सर्भे, डिजाइन, लागत अनुमान तयार गरी माथि उल्लेख गरे बमोजिम गरिनेछ । यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गर्न सकिनेछ ।

क. संग्रहालयको भवन निर्माण र निर्माणाधिन भवनलाई सहयोग तथा भवनको स्तरोन्नति,
ख. संग्रहालय संरक्षणका कार्यहरु,
ग. संग्रहालयमा राखिने सामग्री खोजि, खरिद, व्यवस्थित रुपमा राख्ने, मिलाउने, सजाउने कार्यहरु,
घ. संग्रहालय अवलोकन गर्न आउने पर्यटकलाई आवश्यक पदमार्ग, सडक र पिउने पानी, शौचालय, बिश्राम स्थल, वाटिका निर्माण लगायतका अन्य पूर्वाधारका कार्यहरु,
ङ. पर्यटकलाई सूचना दिन आवश्यक व्यवस्था,
च. यस्तै प्रकृतिका अन्य क्रियाकलापहरु ।

उपर्युक्त कार्यक्रमहरु कार्यान्वयन गर्दा नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात सेवा संचालनमा निरन्तरता दिने र यस्ता सार्वजनिक सम्पत्तिहरु संरक्षणको समेत सुनिश्चितता हुने गरी सम्बन्धित संस्था वा निकायलाई हस्तान्तरण गर्नुपर्नेछ।
कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, लोकेशन, रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नुपर्नेछ।

५.३.३ ताल/झरना/पोखरी/गुफा सिमसार क्षेत्र संरक्षण,पर्यटन विकास र प्रवर्द्धन

यस कार्यक्रमको मूल उद्देश्य वातावरणीय एवम् पारिस्थितिकीय सन्तुलन जोगाइराख्न, पर्यापर्यटनलाई बढावा दिन र पर्यटक आकर्षणमा योगदान पुऱ्याउनु रहेको छ। यस कार्यक्रम अन्तरगत निम्न क्रियाकलापहरु संचालन गरिनेछ।

१. जगदिशपुर तालमा बहुउद्देश्यीय भवन र चरा अवलोकन टावर निर्माण र BIODIVERSITY EDUCATIONAL GARDEN स्थापना,
२. नारायणपुर तालको संरक्षण र सौन्दर्यीकरण बुटवल- १६,
३. शान्तिपुर अर्जेवा झरना सौन्दर्यीकरण चन्द्रकोट गाउँपालिका गुल्मी,
४. ताराताल संरक्षण मधुवन ७ बर्दिया,
५. तलाउ संरक्षण रामजानकी मन्दिर जानकी- २ बाँके,

६. मनिकापुर गायत्री पार्क तथा ताल संरक्षण नेपालगंज २०,
७. जखेरा ताल संरक्षण तथा सौन्दर्यीकरण , देउखुरी
८. चमेरे गुफा तथा सुकेदह संरक्षण एवम् सौन्दर्यीकरण तुलसीपुर- ४ दाङ,
९. सौराहा ताल संरक्षण तथा व्यवस्थापन राजपुर- २ दाङ ,
१०. पर्यटकीय महत्वका तातोपानी मूल र मुहान संरक्षण तथा प्रवर्द्धन, रूकुम पूर्व ,
११. सत्यवती ताल संरक्षण तिनाउ पाल्पा,
१२. बुद्धमंगल ताल पर्यटन पूर्वाधार विकास ,
१३. जलाशय संरक्षण तथा पर्यटकीय पूर्वाधार निर्माण बोडगाउ लौगाइ मधुवन वाणगंगा ८ कपिलवस्तु,
१४. पार्क निर्माण र पोखरी सौन्दर्यीकरण बसडिलवा सि न पा ८,
१५. बढैया ताल क्षेत्रमा पर्यटकीय पूर्वाधार निर्माण बर्दिया,
१६. पुरनधारा झरना गुरुयोजना निर्माण र पानी मुहान संरक्षण दाङ,
१७. विचित्र गुफामा पर्यटन पूर्वाधार विकास धुर्कोट ५,
१८. उमिर गुफा पर्यटकीय क्षेत्र संरक्षण शिवराज न. पा. १ कपिलवस्तु

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार भएको हकमा योजना वा प्रतिवेदनले तोकेको प्राथमिकताका आधारमा सम्बन्धित सरोकारवालाहरुको सहभागितामा क्रियाकलापहरु छनौट गरेर लागत अनुमान तयार गरी कानून बमोजिम सकभर उपभोक्ता समिति मार्फत कार्यान्वयन गर्नु पर्नेछ। गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार नभएको हकमा सर्भे, डिजाइन, लागत अनुमान तयार गरी माथि उल्लेख गरे बमोजिम गरिनेछ । यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गरिनेछ ।

क. ताल पोखरी सिमसारहरुको थिग्रिकरण र भूक्षयका अन्यकारणहरुले हुन सक्ने क्षतिलाई न्यूनीकरण गर्न संरक्षणका कार्यहरु गर्ने,
ख. पानीको उपलब्धता बढाउन र दीगोपना बढाउन जैविक/बायो इन्जिनियरिङ प्रविधिहरुको प्रयोग गर्ने,
ग. पानीको मात्रात्मक र गुणात्मक वृद्धिका लागि पानी संचित हुने क्षेत्रहरुको आकार बढाउने, सरसफाइ, घेरावारा बाँध डिल निर्माण मर्मत आदि कार्य वातावरणमैत्री तरिकाले गर्ने (पोखरीको डील कराही आकारको हुनुपर्ने जसबाट पोखरीमा आउने जाने वन्यजन्तु र जनावर तथा मान्छे समेत क्षति हुनबाट जोगिने छन्),
घ. ताल/पोखरी सिमसार/क्षेत्रहरुको पर्यटकीय आकर्षण बढाउन र प्रयोग गर्ने आवश्यक पुर्वाधारको काम, पहुँच मार्ग, नेटवायर समेतको लाइभ फेन्सिङ, बगैचा निर्माण, बिजुली पानीको व्यवस्था, चमेना गृह, बिश्राम गृह, दृश्यावलोकन मचान, मनोरन्जन स्थल, शौचालय, मौलिकता झल्कने संरचनाको साथसाथै सुगन्धित र सजावट प्रजातीका फुलवारी एवम् सदाबहार बिरुवा रोपण, फलफुलको बगैचा पिकनिक स्पट आदि निर्माण,
ङ. स्थानीय समुदायमा सचेतना बढाउने खालका होर्डिङ बोर्डहरु ।

उपर्युक्त कार्यक्रमहरु कार्यान्वयन गर्दा नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात सेवा संचालनमा निरन्तरता दिने र यस्ता सार्वजनिक सम्पत्तिहरु संरक्षणको समेत सुनिश्चितता हुने गरी सम्बन्धित संस्था वा निकायलाई हस्तान्तरण गर्नुपर्नेछ।

कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, लोकेशन, पोखरीको क्षमता (घनमिटर) र साइज, रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ५.३.४ होमस्टे संचालन विकास र प्रचार प्रसार

यस कार्यक्रमको मूल उद्देश्य स्थानीय समुदायको संलग्नतामा स्थानीय वातावरण, जैविक विविधता लगायत सामाजिक, साँस्कृतिक, प्राकृतिक सम्पदाको संरक्षण र संवर्द्धन गर्दै ग्रामीण पर्यापर्यटनको प्रवर्द्धन मार्फत ग्रामीण क्षेत्रका स्थानीय जनसमुदायमा स्वरोजगारको अवसर सिर्जना गरी प्राप्त पर्यटनको लाभ विपन्न वर्गसम्म समेत पुऱ्याउनु रहेकोछ। यस कार्यक्रम अन्तरगत पुराना तथा नयाँ होमस्टेलाई स्वीकृत होमस्टे संचालन तथा अनुदान सम्बन्धी कार्यविधि बमोजिम अनुदान सहयोग गरिनेछ।

### ५.३.५ पर्यटकीय सूचना केन्द्र निर्माण र व्यवस्थापन

यस कार्यक्रमको मूल उद्देश्य प्रदेशको पर्यटकीय गन्तव्यहरुको जानकारी, भौगोलिक अवस्था तथा साँस्कृतिक पहिचान, वन र वन्यजन्तु सम्बन्धी जानकारी लगायतका कुराहरु सूचना केन्द्रमा राखी पर्यटकहरुलाई सरल र सहज ढंगले यथेष्ट सूचनाहरु प्रदान गर्नु रहेकोछ। यस कार्यक्रम अन्तरगत निम्न क्रियाकलापहरु संचालन गरिनेछ।

क. पर्यटन सूचना केन्द्र निर्माण भैरहवा
ख. पर्यटन सूचना केन्द्र निर्माण कोहलपुर, बाँके

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा सर्वे डिजाइन, लागत अनुमान तयार गरी प्रचलित कानून बमोजिम कार्यान्वयन गर्नु पर्नेछ। यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गर्न सकिनेछ ।

क. डिजिटल सूचना प्रणाली,
ख. प्रदेश भित्रका महत्वपूर्ण पर्यटकीय गन्तव्य स्थल तथा पदमार्गहरुको जानकारी एवम् तस्वीर,
ग. आर्थिक, सामाजिक, साँस्कृतिक, राजनीतिक जानकारी सहित जिल्ला र प्रदेशको पहिचान झल्कने तस्वीर,
घ. प्रदेशमा भित्रिने आन्तरिक र बाह्य पर्यटकको तथ्याङ्क, स्मार्ट टिभि, निशुल्क इन्टरनेट, टिकट काउण्टर
ङ. र यस्तै प्रकारका अन्य क्रियाकलापहरु ।

### ५.३.६ उद्यान/पार्क/ गार्डेन निर्माण विकास र प्रवर्द्धन

यस कार्यक्रमको मूल उद्देश्य भएका पार्क र उद्यानहरुको स्तरोन्नती र नयाँ पार्क/उद्यानहरुको निर्माण गरी आन्तरिक र बाह्य पर्यटक आकर्षित गर्नु रहनेछ।यस कार्यक्रम अन्तरगत निम्न क्रियाकलापहरु संचालन गरिनेछ।

१. वनस्पति उद्यान निर्माण बुटवल,
२. मल्टिप्रपोज बोटानिकल गार्डेन निर्माण घोराही,
३. बोटानिकल गार्डेन निर्माण तुलसीपुर,
४. रामापिथेकस जुलोजिकल पार्क निर्माण, रुपन्देही,
५. रामपिथेकस जियोलोजिकल पार्क निर्माण रुपन्देही,
६. जडिबुटी उद्यान निर्माण इस्मा, गुल्मी,

७. मानसरोबर प्रतिकात्मक स्थल सहित बोटानिकल गार्डेन निर्माण, बाँके,
८. बाह्र कुने दहमा बहुउद्देश्यीय पार्क निर्माण, दाङ,
९. वनस्पति उद्यान निर्माण नेपालगंज,
१०. शहिद चुनमाया पार्क पूर्वाधार निर्माण, पाल्पा,
११. तानसेन श्रीनगरमा उद्यान निर्माण, पाल्पा,
१२. बुद्धमाया शान्ती उद्यान देवदह ४, रूपन्देही,
१३. डण्डाखोलामा हरित पार्क निर्माण सि.न.पा. २,
१४. शहिद स्मारक पार्क निर्माण घोराही ११ दाङ,
१५. ढोडनी बगर उद्यान निर्माण मुसीकोट ५ गुल्मी,
१६. सृजना सा व मा पार्क निर्माण कोहलपुर १२ बाँके,
१७. ग्रिन पार्क निर्माण लमही ५, दाङ देउखुरी,
१८. जगलकुटी वनस्पति उद्यान गढवा २ दाङ, देउखुरी,
१९. पुष्पलाल स्मृति पार्कमा पर्यटकीय पूर्वाधार विकास ति.न.पा. रूपन्देही,
२०. तिलोत्तमा पार्क निर्माण ति.न.पा. रूपन्देही ,
२१. करहिया सामुदायिक वनमा पार्क निर्माण करहिया, रूपन्देही,
२२. हनुमान पार्क निर्माण सि.न.पा. ४ रुपन्देही,
२३. शहिद स्मृति पार्क निर्माण थवाङ १, रोल्पा,
२४. शहिद पार्क व्यवस्थापन गुलरिया बर्दिया,
२५. चिलिया पार्क बाउन्न कोटी सा.व. रुपन्देही,
२६. शहिद मनोज झपेन्द्र स्मृति पार्क सन्धिखर्क,
२७. बंगलाचुली पार्क निर्माण बंगलाचुली गा.पा दाङ,
२८. नवदुर्गा सा.वमा आधुनिक ग्रिन पार्क निर्माण तुलसीपुर दाङ,
२९. ज्योतिबाल उद्यान निर्माण शितगंगा ४ अर्घाखाँची,
३०. दंगीशरण कलचरल पार्क तथा शालिक निर्माण, दाङ,
३१. लखन थापा पार्क घोराही, दाङ,
३२. वेवरी ग्रीन पार्कमा पर्यटन पूर्वाधार ति.न.पा. १० रुपन्देही,
३३. चिल्ड्रेन पार्क निर्माण खजुरा गा.पा ३ बाँके,
३४. ज्योति बाल उद्यान गृहमा पार्क निर्माण राजापुर न.पा ४ बर्दिया,
३५. तिलकथान पार्कमा पर्यटन पूर्वाधार विकास रैनादेवी छहरा गा.पा. ४ पाल्पा,
३६. पार्क निर्माण सौन्दर्यीकरण तथा पूर्वाधार विकास पालीनन्दन गा.पा ५ विष्णुपुरा, नवलपरासी पश्चिम,
३७. शहिद स्मृति पार्कमा पुर्वाधार विकास, विजुवार, प्यूठान ।

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार भएको हकमा योजना वा प्रतिवेदनले तोकेको प्राथमिकताका आधारमा सम्बन्धित सरोकारवालाहरुको सहभागितामा क्रियाकलापहरु छनौट गरेर लागत अनुमान तयार गरी कानून बमोजिम सकभर उपभोक्ता समिति मार्फत कार्यान्वयन गर्नु पर्नेछ। गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार नभएको हकमा सर्भे, डिजाइन, लागत अनुमान तयार गरी माथि उल्लेख गरे बमोजिम गरिनेछ । यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गर्न सकिनेछ ।



सचिव

क. सरोकारवालाहरुसँगको छलफल र समन्वयमा कार्यक्रमगत पर्यटकीय पार्क उद्यानहरुको निर्माण स्तरोन्नती,
ख. वाटिका निर्माण र स्तरोन्नती,
ग. सिंढी, फुट ट्रेल निर्माण र मन्दिरमा पार्क निर्माण तथा बाल उद्यान निर्माण,
घ. पहुँच मार्ग नेट वायर समेतको लाइभ फेन्सीङ तथा गार्डेनिङ,
ङ. परिसरमा आवश्यकतानुसार सोलार बिजुली र पानीको व्यवस्था सूचना केन्द्र निर्माण,
च. चमेना गृह, शेड हाउस, मनोरन्जन स्थल, शौचालय आदि निर्माण,
छ. सुगन्धित र सजावट प्रजातीका फुलवारी एवम् सदाबहार रुख बिरुवा रोपण, फलफुलको बगैचा निर्माण।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात सेवा संचालनमा निरन्तरता दिने र यस्ता सार्वजनिक सम्पत्तिहरु संरक्षणको समेत सुनिश्चितता हुने गरी सम्बन्धित संस्था वा निकायलाई हस्तान्तरण गर्नुपर्नेछ। यस्ता पार्कहरु निर्माण गर्दा वातावरण मैत्री हिसाबले गराउनु पर्नेछ। पूर्वाधार निर्माण गर्दा पार्कको कूल क्षेत्रफलको एक चौथाइमा नबढाइ गर्नु पर्नेछ। अन्य तीन चौथाइ क्षेत्रफलमा सुगन्धित र सजावट प्रजातीका फुलवारी एवम् सदाबहार रुख बिरुवा लगाइ हरियाली तथा रमणीय पार्कको रुपमा विकास गर्नुपर्नेछ। वातावरणीय दृष्टिकोणले सकभर कंक्रिटको प्रयोग कम गर्नु उपयुक्त हुन्छ।

कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, लोकेशन, नक्शा क्षेत्रफल, रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ५.३.७ भ्यूटावर निर्माण र मर्मत संभार

यस कार्यक्रमको मूल उद्देश्य पर्यटकको लागि प्राकृतिक दृश्यावलोकन गर्न सहयोग गर्ने रहेको छ ।यसमा गावरभ्याली होमस्टे क्षेत्रमा भ्यू टावर निर्माण र भ्यू टावर सहित पर्यटकीय पूर्वाधार निर्माण राजापुर-१० बर्दिया को कार्यक्रम संचालन गरिनेछ। उल्लेखित कार्यक्रमहरु संचालन गर्दा गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार भएको हकमा योजना वा प्रतिवेदनले तोकेको प्राथमिकताका आधारमा सम्बन्धित सरोकारवालाहरुको सहभागितामा क्रियाकलापहरु छनौट गरेर लागत अनुमान तयार गरी कानून बमोजिम सकभर उपभोक्ता समिति मार्फत कार्यान्वयन गर्नु पर्नेछ। गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार नभएको हकमा सर्भे, डिजाइन, लागत अनुमान तयार गरी माथि उल्लेख गरे बमोजिम गरिनेछ । यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गर्न सकिनेछ ।

क. पहुँच मार्ग नेट वायर समेतको लाईभ फेन्सिङ्ग तथा गार्डेनिङ
ख. परिसरमा आवश्यकता अनुसार सोलार बिजुली पानी व्यवस्था सूचना केन्द्र निर्माण
ग. चमेना गृह, बिश्राम गृह, मनोरन्जन स्थल, शौचालय आदि निर्माण
घ. सुगन्धित र सजावट प्रजातीका फुलवारी एवम् सदाबहार बिरुवा रोपण फलफुलको बगैचा निर्माण।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । कार्य सम्पन्न पश्चात सेवा संचालनमा निरन्तरता दिने र यस्ता सार्वजनिक सम्पत्तिहरु संरक्षणको समेत सुनिश्चितता हुने गरी सम्बन्धित संस्था वा निकायलाई हस्तान्तरण गर्नुपर्नेछ।



सचिव

कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, लोकेशन, नक्शा भ्यूटावरले ओगटेको र उद्यान समेतले ओगटेको क्षेत्रफल, उचाइ, भ्यूटावरको क्षमता (एकपटकमा धान्न सक्ने मान्छेको संख्या) रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ५.३.८ पदमार्ग निर्माण, स्तरोन्नति तथा मर्मत र सुधार

यस कार्यक्रमको मूल उद्देश्य पदमार्गहरुको स्तरोन्नति, सुधार तथा निर्माण गरी सुरक्षित एवम् आकर्षित बनाइ पर्यटन प्रवर्द्धनमा सहयोग पुऱ्याउने रहेको छ। यस अन्तरगत निम्न कार्यक्रमहरु कार्यान्वयन गरिनेछ।

क. सत्यवती ठुलो लुम्पेक थाप्ले पदमार्ग सत्यवती गा.पा. गुल्मी
ख. नरपानी कालिमाटी पाणिनी तपोभूमि पदमार्ग, अर्घाखाँची
ग. गुरिल्लायार्सा ट्रेल निर्माण, रोल्पा
घ. गुरिल्लायार्सा ट्रेल निर्माण रुकुम
ङ. बोलबम धाम हिलपार्क पहुँच पर्यटकीय पदमार्ग निर्माण सैनामैना- २, रूपन्देही
च. गौमुखी पर्यटकीय पदमार्ग निर्माण, प्युठान
छ. मदाने मालिका पर्यटकीय पूर्वाधार तथा पदमार्ग निर्माण मदाने २ गुल्मी
ज. बल्डेङगढी देखी नुवाकोटगढी सम्म पर्यटकीय पदमार्ग निर्माण, पाल्पा

यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गरिनेछ ।

क. पर्यटक पदमार्ग स्तरोन्नती सुधार तथा निर्माण कार्यक्रम अन्तरगत मेसिन प्रयोग नगरी पैदल मार्गको छेउ भित्तामा अस्वभाविक रुपमा बढेका बाटो, अवरोध गरेका झाडी बुटयान काँडा ढंगा चट्टान बाटोबाट पन्छाउने,
ख. आवश्यकतानुसार इन्जिनियरिङ्ग डिजाइन गरी भिरालोपनको ग्रेड मिलाउने, वर्षातको भेल पानी तर्काउने नाली निर्माण, बाटो समथर पार्ने, ढुङ्गा छाप्ने, उकाली ओरालीमा ढुंगा छापी सिंढी बनाउने,
ग. स-साना खोल्साखोल्सीमा कलभर्ट निर्माण गर्ने, ढुङ्गा छाप्ने,
घ. विश्रांम गृह बनाउने, स्वच्छ खानेपानीको व्यवस्था गर्ने, शौचालय निर्माण गर्ने, ठाउँ ठाउँमा पर्यटकलाई आवश्यक पर्ने जानकारी सहित समय दुरीको दिशा निर्देश गर्ने सूचना पाटी वा साइन पोष्ट राख्ने,
ङ. आवश्यकता अनुसार सोलार बिजुली बत्तिको व्यवस्था समेत गर्ने,
च. बाटोको दुबै तर्फ सम्भव भएसम्म खाली स्थानमा सूगन्धित र सजावट हुने प्रजातीको फूलवारी एवम् सदाबहार बिरुवा र फलफूलका बिरुवा रोपण आदि।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । यस्ता सार्वजनिक सम्पत्तिहरु संरक्षणको समेत सुनिश्चितता हुने गरी सम्बन्धित संस्था वा निकायलाई हस्तान्तरण गर्नुपर्नेछ।

कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, एलाइनमेण्ट, नक्शा, पदमार्गको सेगमेण्ट अनुसारको लम्बाइ र चौडाइ, रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

सचिव

### ५.३.९ पर्यटकीय पूर्वाधार विकास र संरक्षणका कार्यक्रमहरु

यस कार्यक्रमको मुख्य उद्देश्य पर्यटकीय संभावना रहेका महत्वपुर्ण स्थलहरूको पूर्वाधार विकास गरी पर्यटकहरूको संख्या वृद्धि गर्ने र थप पर्यटकीय गन्तव्यहरूको विकास गर्ने रहेको छ। यस अन्तरगत निम्न कार्यक्रमहरु कार्यान्वयन गरिनेछ।

१. रुकुमको तकसेरालाई पर्यटकीय गन्तव्यको रुपमा विकास गर्ने,
२. रेसूङ्गा पर्यटकीय पूर्वाधार विकास, गुल्मी,
३. बम्घाकोट पर्यटकीय क्षेत्र विकास तथा संरक्षण रुरु गा पा, गुल्मी,
४. पाणिनी तपोभूमि क्षेत्रको पर्यटकीय पूर्वाधार निर्माण , अर्घाखाँची,
५. छिल्लीकोट पर्यटकीय क्षेत्र संरक्षण तुलसीपुर, दाङ,
६. बराध्यान संरक्षण तथा सौन्दर्यीकरण पुथा उत्तरगंगा, रूकुम पुर्व,
७. राम्चेमा पर्यटकीय पूर्वाधार विकास रामपुर, ,पाल्पा
८. रम्घा र रिम्घा क्षेत्र पर्यटकीय पूर्वाधार विकास रम्घा, पाल्पा,
९. पिपलडाँडामा पर्यटकीय पूर्वाधार विकास माथागढी, पाल्पा ,
१०. विष्णु पाण्डे स्मृति प्रतिष्ठानमा पर्यटकीय पूर्वाधार विकास सुनवल, नवलपरासी,
११. शिवगढी ऐतिहासिक किल्ला संरक्षण शिवराज , कपिलवस्तु,
१२. नाङ्गी पर्यटन क्षेत्र विकास कार्यक्रम गौमुखी, प्युठान,
१३. मालारानी/ वामरुक नरसिंह क्षेत्रमा पर्यटकीय पूर्वाधार निर्माण मालारानी गाउँपालिका,
१४. छत्र देवालय परिसरमा पर्यटकीय पूर्वाधार विकास छत्रदेव अर्घाखाची ,
१५. रिहार क्षेत्र पर्यटकीय पूर्वाधार निर्माण दाङ,
१६. गजेडी दानापुर पर्यटकीय पूर्वाधार निर्माण, रूपन्देही,
१७. बगैचासहित कनकमूनि बुद्धको प्रतिमा निर्माण निग्लिहवा कपिलवस्तु,
१८. बगैचासहित क्रकुछन्द बुद्धको प्रतिमा निर्माण गोटिहवा कपिलवस्तु,
१९. ऐतिहासिक रमणेश्वर पर्यटकीय गुरुयोजना निर्माण र सौन्दर्यीकरण रम्भा तोकलक पाल्पा
२०. लुंगमा पर्यटकीय पूर्वाधार निर्माण नौबहिनि गा पा ६ प्यूठान
२१. पर्यटकीय पूर्वाधार निर्माण महराजगंज न पा ९ औरहवा कपिलवस्तु

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार भएको हकमा योजना वा प्रतिवेदनले तोकेको प्राथमिकताका आधारमा सम्बन्धित सरोकारवालाहरुको सहभागितामा क्रियाकलापहरु छनौट गरेर लागत अनुमान तयार गरी कानून बमोजिम उपभोक्ता समिति वा टेण्डर प्रकृयाबाट कार्यान्वयन गर्नु पर्नेछ। गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदन तयार नभएको वा क्रियाकलाप मात्र तोकेको डिजाइन इष्टीमेट नभएको हकमा स्थानीय सरोकारवालाहरुको समेत सहभागितमा स्थलगत रुपमा अवलोकन गरी गर्नु पर्ने क्रियाकलापहरु पहिचान गर्ने र ति क्रियाकलापहरुको सर्भे, डिजाइन, लागत अनुमान तयार गरी कार्यान्वियन गर्नुपर्नेछ। यी कार्यक्रमहरुमा आवश्यकता अनुसार निम्न क्रियाकलापहरु गर्न सकिनेछ ।

क. कार्यक्रमको माग अनुसार पर्यटकीय क्षेत्रको सूचना म्याप, होर्डिङ बोर्ड, पहुँच मार्ग, पदमार्ग मोटरेवल बाटो, जलमार्ग, पार्कीङ निर्माण र स्तरोन्नती,
ख. पार्क, बगैचा निर्माण, शौचालय निर्माण र व्यवस्थापन, बिजुली, इन्टरनेटको व्यवस्था,
ग. पिकनिट स्पट, चमेना गृह, स्वास्थ्य क्लिनिक व्यवस्थापन,

घ. मनोरन्जनस्थल र स्थानीय मौलिकता बोकेको सम्पदा मठ/मन्दिर/ सत्तल आदिको निर्माण र जिर्णोद्वार,
ङ. आवश्यकता अनुसार अन्य पूर्वाधार निर्माणका कार्यहरु ।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । यस्ता पर्यटकीय क्षेत्रको पूर्वाधारहरुको संरक्षण र व्यवस्थापनको समेत सुनिश्चितता हुने व्यवस्था मिलाउनु पर्नेछ। कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा,मुख्य क्रियाकलापहरुको नाम र परिमाण, रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

### ५.३.१० सांस्कृतिक डबली निर्माण

यस कार्यक्रमको मूख्य उद्देश्य स्थानीय कला संस्कृतिको संरक्षण र प्रवर्द्धन मार्फत पर्यटन विकासमा टेवा पुऱ्याउनु रहेको छ। यस अन्तरगत निम्न कार्यक्रमहरु कार्यान्वयन गरिनेछ।

१. पाल्पाको श्रीनगरमा साँस्कृतिक डबली निर्माण
२. दाङको घोरदौरामा साँस्कृतिक डबली निर्माण,
३. नुवाकोटगढीमा साँस्कृतिक डवली पूर्वाधार निर्माण

उल्लेखित कार्यक्रमहरु संचालन गर्दा गुरुयोजना वा विस्तृत परियोजना प्रतिवेदनले तोकेका क्रियाकलापहरु उपलब्ध बजेटको आधारमा प्राथमिकिकरण गरी प्याकेज तयार गरेर प्रचलित कानून बमोजिम निमार्ण गर्नु पर्नेछ।

नियमित अनुगमन गर्ने, होर्डिङ बोर्डको व्यवस्थापन गर्ने जस्ता विषयहरुलाई ध्यान दिनु पर्नेछ । निर्माण सम्पन्न पश्चात यस्ता सार्वजनिक सम्पत्तिहरु संरक्षण तथा व्यवस्थापनको समेत सुनिश्चितता हुने व्यवस्था मिलाउनु पर्नेछ ।

कार्य सम्पन्न पश्चात प्रगति प्रतिवेदनमा कार्य गर्नुपूर्व र कार्य सम्पन्न पश्चातको फोटो, नक्शा, डबलीको क्षमता (एकपटकमा अटाउने मानिसहरूको अधिकतम संख्या), पार्किङ क्षमता, रोजगारी सिर्जना र खर्च रकम साथै गरेको कामको छोटो विवरण आदि उल्लेख गर्नु पर्नेछ।

## ५.४ पूँजीगत अनुसन्धान( पुंजीगत खर्च)

यस कार्यक्रमको मूल उद्देश्य प्रदेश भित्रका पर्यटकीय सम्भावना बोकेका स्थलहरुको अध्ययन, अनुसन्धान र दीर्घकालीन योजनाको निर्माण गरी पर्यटन प्रवर्द्धनमा सघाउ पुऱ्याउनु रहेकोछ। यस अन्तरगत निम्न कार्यक्रमहरु कार्यान्वयन गरिनेछ।

१. हिल स्टेशन विकास सम्भाव्यता अध्ययन,
२. साहसिक पर्यटन विकासका सम्भाव्यता अध्ययन,
३. बुद्ध सर्किटका महत्वपूर्ण स्थानहरुका खोज तथा अनुसन्धान,
४. पर्यटन सम्बन्धी विभिन्न कार्यहरुका लागि परामर्श सेवा कार्य खरिद,
५. प्रादेशिक पर्यटन रणनीतिक गुरुयोजना निर्माण,
६. पर्यटन प्रवर्द्धन प्याकेज विकास अध्ययन तथा प्रकाशन,
७. दरहवा गुरुयोजनाको शुरुवात शुद्धोधन ५, रुपन्देही,

८. 3D VIRTUAL OUTDOOR TOUR GUIDE APPLICATION निर्माण ।

उल्लेखित कार्यक्रमहरु कार्यान्वयन गर्दा सम्बन्धित विज्ञको राय लिई कार्यसूची(TOR) निर्माण गरी स्वीकृत गराइ प्रचलित कानून बमोजिम परामर्श सेवा खरिद गरी सेवा प्रदायक संस्थाबाट कार्यान्वयन गरिनेछ।

## ५.५ लुम्बिनी भ्रमण वर्ष २०७६ कार्यक्रम

लुम्बिनी भ्रमण वर्ष, २०७६ कार्यक्रम संचालन गर्नुको मूल उद्देश्य देहाय बमोजिम रहेका छन ।

क. नेपाल भ्रमण वर्ष, २०२० कार्यक्रमको आधार प्रशस्त गर्नु,
ख. यस क्षेत्रको धार्मीक पर्यटकीय साँस्कृतिक,पूरातात्विक एवम् ऐतिहासिक महत्वका स्थानहरुको पहिचान संरक्षण सम्बर्द्धन तथा व्यवस्थापनमा टेवा पुऱ्याउनु

यस कार्यक्रम अन्तरगत निम्न क्रियापलापहरु संचालन गरिनेछः

क. समिति / उपसमिति गठन र संचालन
ख. सभा/समारोह/उत्सव/ पूजाआजा
ग. प्रचार प्रसार, प्रकाशन
घ. सरसफाइ र सौन्दर्यीकरण
ङ. खेलकुद , साहित्य संस्कृति संवन्धी कार्यक्रम तथा क्षमता अभिवृद्धि
च. अन्तर्राष्ट्रिय स्तरको बौद्ध दर्शन र लुम्बिनीका बारेमा कार्यपत्र प्रस्तुती

यस कार्यक्रमलाई समग्रमा दिशानिर्देश गर्न एक मूल समिति रहेको छ। कार्यक्रमको व्यवस्थापन कार्यकारी समितिले गर्नेछ। यस समितिले आवश्यकता अनुसार लुम्बिनी विकास कोष र जिल्ला समन्वय समिति तथा स्थानीय तहसँग समन्वय गरी कार्यसम्पादन गराउनेछ। निजी क्षेत्रसँगको सहकार्यमा गर्नुपर्ने कार्यका लागि बजेट सीमाको अधिनमा रहि प्रस्ताव माग गरी प्रचलित कानून बमोजिम कार्यक्रमहरु संचालन गरिनेछ। यसका साथै सो समितिले विभिन्न विषयगत उपसमितिहरु गठन गरि कार्यदिशा दिन सक्नेछ। लुम्बिनि भ्रमण वर्ष २०७६ को सचिवालय उद्योग पर्यटन वन तथा वातावरण मन्त्रालयमा रहको छ। यसले उक्त कार्यक्रम कार्यान्वयनका लागि प्रशासनिक तथा समन्वय इकाइको रुपमा कार्य गर्नेछ । यसमा स्वीकृत लुम्बिनी भ्रमण वर्ष २०७६ कार्यक्रम दस्तावेज अनुरूप कार्यक्रम कार्यान्वयन गरिनेछ ।

## ५.६ नेपाल भ्रमण वर्ष, २०२० को जिल्ला स्तरीय समिति गठन तथा पर्यटन प्रवर्द्धन कार्यक्रम

यस कार्यक्रमको मूल उद्देश्य नेपाल सरकारले घोषणा गरेको नेपाल भ्रमण वर्ष २०२० लक्ष्यप्राप्त गर्न जिल्ला स्तरबाट सहयोग पुऱ्याउनु रहेकोछ।

यस प्रदेशका १२ वटा जिल्लामा जिल्ला स्तरीय समिति गठन गरी कार्यक्रम कार्यान्वयन गरिनेछ। कार्यक्रममा गरिने क्रियाकलापहरु नेपाल भ्रमण वर्ष २०२० को प्रदेश स्तरीय समितिको बैठकबाट निर्णय भए बमोजिम वा तोकिएको कार्यविधी बमोजिम हुनेछ।

# परिच्छेद ६

# वाणिज्य तथा आपूर्ति व्यवस्थापन कार्यक्रम (३०७०००१६)

यस परिच्छेद अन्तर्गत वाणिज्य तथा आपूर्ति तर्फका कार्यक्रम कार्यान्वयन कार्यविधि समेटिएको छ ।

## ६.१ खाद्य वस्तुको गुणस्तर मापन प्रयोगशाला स्थापना (बहुवर्षिय कार्यक्रम)

गुणस्तरीय खाद्यवस्तु सुनिश्चितताकोलागि खाद्य वस्तुको गुणस्तर मापन गर्न प्रयोगशाला स्थापना गरिनेछ ।
भौतिक पूर्वाधार विकास मन्त्रालय मार्फत आ.व.२०७५/७६ देखि निर्माण कार्य सुरु भएकोमा आ.व. २०७७/७८ मा प्रयोगशाला निर्माण सम्पन्न हुनेछ ।

## ६.२ खाद्यान्न भण्डारण सम्भाव्यता अध्ययन(रुकुम र रोल्पा)

रुकुम र रोल्पा जिल्लामा खाद्यान्न भण्डारण भवनको निर्माणको लागि सम्भाव्यता अध्ययन कार्य परामर्श सेवाबाट गरिनेछ। परामर्श दाताले गरेको कामको नियमित अनुगमन गरी प्रगतिको सुनिश्चितता गरिनेछ ।

## ६.३ आन्तरिक उत्पादनको मेला प्रदर्शनी

प्रदेश भित्रका लघु, घरेलु तथा साना उद्योगहरुबाट उत्पादित बस्तुहरुको पहिचान, प्रचार प्रसार र बजारीकरणमा टेवा पुर्याई आन्तरिक उत्पादनमा वृद्धि ल्याउने उद्देश्यले यो कार्यक्रम गरिनेछ।

जिल्लामा सञ्चालन हुने उद्योग वाणिज्य संघ, घरेलु तथा साना उद्योग महासंघ लगायत अन्य संघसंस्थाले सञ्चालन गर्ने व्यापार तथा औद्योगिक मेला प्रदर्शनीमा लघु, घरेलु तथा साना उद्योगहरुबाट उत्पादित बस्तुहरुको प्रर्दशन गर्नको लागि आवश्यक पर्ने खर्चमध्ये उद्यमीहरुको सम्बन्धित संस्थाबाट प्राप्त प्रस्तावका आधारमा आपसी समझदारीबाट साझेदारीमा रकम खर्च गरिनेछ । यसका साथै कार्यालयले स्टलको व्यवस्थापन गरी सम्बन्धित उद्यमीहरुबाट प्रदर्शनको लागि प्रस्ताव माग गरी सोको आधारमा सम्बन्धित उद्यमी वा उद्यमी समूहलाई समेत सहयोग गरिनेछ । एउटा प्रदर्शनीमा माथी उल्लखित दुई बिकल्प मध्ये कुनै एक बिकल्प अपनाउनु पर्नेछ ।

## ६.४ वाणिज्य/ बजार अनुगमन निरीक्षण

व्यापार व्यावसाय लाई मर्यादित र उपभोक्तालाई गुणस्तरीय उपभोग्य वस्तु तथा सेवा उपलब्ध गराउने उद्देश्यले यो कार्यक्रम संचालन गरिनेछ ।

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय र उद्योग, वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालयले प्रदेशभित्रका सबै जिल्लाहरुमा रहेका वाणिज्य तथा बजार अनुगमन गर्न सक्नेछ भने सम्बन्धित घरेलु तथा साना उद्योग कार्यालयहरुले आफ्नो जिल्ला भित्र अनुगमन गर्नेछन् ।अनुगमन गर्दा आवश्यकता अनुसार स्थानीय तह, स्थानीय प्रशासन लगायतका निकायहरुसँग समन्वय गरी प्रचलित कानून बमोजिम बाणिज्य। बजार अनुगमन गरी सम्बन्धित निकायमा प्रतिवेदन पेश गर्नु पर्नेछ।

बजार अनुगमनमा खटिएका टोलीलाई खाजा, खाना, आवश्यकता अनुसार यातायात खर्च र नियमानुसारको भत्तामा यस शीर्षकको बजेट खर्च गर्न सकिनेछ ।

## ६.५ उद्योग तथा वाणिज्य फर्महरुको तथ्याङ्कहरुको अपडेट

प्रदेश भित्र सञ्चालनमा रहेका उद्योग तथा बाणिज्य फर्महरुको अभिलेखलाई व्यवस्थित गर्नको लागि तथ्याङ्क संकलन गरी अध्यावधिक गरिनेछ ।प्रत्येक घरेलु तथा साना उद्योग कार्यालय तथा विकास समितिले तोकिएको बजेटभित्र खर्च गर्ने गरी आफ्ना कार्यालयमा दर्ता भएका उद्योग तथा वाणिज्य फर्महरुको तथ्याङ्क अध्यावधिक गरी प्रत्येक महिनाको विवरण सम्बन्धित निकायमा अर्को महिनाको ३ गते भित्र पेश गर्नु पर्नेछ ।

## ६.६ उपभोक्ता जागरण अभियान सञ्चालन

उपभोक्ता, उत्पादक र व्यापार व्यवसायीलाई उपभोक्ताको हक अधिकार सम्बन्धी जानकारी गराई गुणस्तरीय सेवा तथा बस्तुको उपभोगमा टेवा पुऱ्याउन यो कार्यक्रम सञ्चालन गरिनेछ।
उद्योग वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालय र जिल्लास्थित घरेलु तथा साना उद्योग कार्यालय तथा घरेलु तथा साना उद्योग विकास समितिले उपभोक्ताको हक अधिकार सम्बन्धी जागरण अभियान सञ्चालन गर्नुपर्नेछ । उपभोक्ताको हक अधिकारको बारेमा जागरण अभियान सञ्चालन छापा, बिद्युतीय माध्यम, जागरण तथा सचेतना गोष्ठी, माईकिङ्ग, विद्यालयमा अध्ययनरत विद्यार्थीहरुलाई उपभोक्ता हक सम्बन्धी कक्षा सञ्चालन, उपभोक्ता हक अधिकार सम्बन्धी होर्डिङ वोर्ड जस्ता क्रियाकलाप सञ्चालन गरिनेछ ।

## ६.७ उद्योग तथा बाणिज्य प्रशासन

उद्योग वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालय र घरेलु तथा साना उद्योग कार्यालय / घरेलु तथा साना उद्योग विकास समितिहरुले उद्योग तथा वाणिज्य फर्महरुको दर्ता, नवीकरण तथा प्रमाणपत्र प्रदान गर्न आवश्यक दर्ता/नवीकरण अभिलेख किताव र प्रमाणपत्रको छपाई तथा अभिलेख व्यवस्थापनको लागि आवश्यक अन्य सामाग्री खरिद यस कार्यक्रमका लागि छुट्याईएको रकमबाट गर्नुपर्नेछ ।

## ६.८ सहकारी मार्फत सुपथ मूल्य पसल सञ्चालन कार्यविधि तयारी तथा सहयोग

सहकारी मार्फत सुपथ मुल्य पसल सञ्चालन गर्न आवश्यक कार्यविधि तयार गरी सुपथ मुल्य पसल सञ्चालकहरुलाई यस कार्यक्रमबाट अनुदान उपलब्ध गराईनेछ ।

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयले सहकारी मार्फत सुपथ मूल्य पसल सञ्चालन गर्न आवश्यक कार्यविधि तयार गर्नु पर्ने छ ।यस कार्यक्रमका लागि छुट्याईएको रकम कार्यविधि तयारी तथा सोको लागि आवश्यक सरोकारवालाहरुसँग छलफल अन्तरक्रियामा र पसल सञ्चालक सहकारीलाई अनुदान दिन खर्च गरिनेछ ।

## ६.९ वाणिज्य तथा आपूर्ति सम्बन्धी कानूनको निर्माण

यस प्रदेश भित्र वाणिज्य तथा आपूर्ति क्षेत्रलाई नियमन र व्यवस्थापन गर्न आवश्यक पर्ने कानूनहरुको निर्माण गर्न यो कार्यक्रम गरिनेछ ।

यसमा, सरोकारवालाहरुसँग छलफल तथा अन्तरक्रिया गरी बाणिज्य तथा आपूर्ति सम्बन्धी कानून निर्माण गर्ने आदि कार्यहरु गरिनेछ ।

## ६.१० उपभोक्ता दिवस

विश्व उपभोक्ता दिवस मनाई उपभोक्ताहरुलाई आफ्नो हक अधिकार बारे जनचेतना अभिबृद्धि गर्न यो कार्यक्रम सञ्चालन गरिनेछ ।घरेलु तथा साना उद्योग कार्यालय, घरेलु तथा साना उद्योग विकास समिति र उद्योग, वाणिज्य तथा उपभोक्ता हित निर्देशनालयले मार्च १५ को दिन उपभोक्ता दिवस कार्यक्रम मनाउनु पर्नेछ ।

## ६.११ प्रदेशमा सञ्चालनमा रहेका पेट्रोल पम्महरुको स्तरोन्नती गर्न मापदण्ड तयारी गरी अनुगमन तथा निरिक्षण गर्ने

पेट्रोल पम्महरुले प्रदान गर्ने ईन्धनको परिमाण र गुणस्तर नियमन गर्न यो कार्यक्रम गरिनेछ ।मन्त्रालयले प्रदेश भित्र रहेका पेट्रोल पम्महरुको स्तरहरुको विज्ञ सहित अध्ययन गरी पेट्रोल पम्महरुको स्तरोन्नती सम्बन्धी मापदण्ड तयार गर्नेछ । मापदण्ड निर्माण भएपछि मापदण्ड बमोजिम पेट्रोल पम्महरुले इन्धन विक्री गरे नगरेको वा स्तरन्नोती गरे नगरेको र सोबाट इन्धन आपूर्तिमा परेको असर (सुधार) को अनुगमन निरिक्षण गरिनेछ। यसमा बिनियोजित बजेट मापदण्ड तयारी गर्न, अनुगमन टोलीको खाजा, खाना, आवश्यकता अनुसारको यातायात खर्च, नियमानुसारको भत्ता आदिमा खर्च गर्न सकिनेछ ।

सचिव

प्रदेश सरकार
प्रदेश नं. ५
उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
बुटवल, रुपन्देही

# परिच्छेद ७

# औद्योगिक विकास तथा प्रवर्द्धन कार्यक्रम (३०७०००१७)

## ७.१ औधोगिक तथ्याङ्क अपडेट ( Up-date ) राख्नका लागि र उद्योग दर्ताका लागि सफ्टवेयर निर्माण

प्रदेश अन्तरगत स्थापना हुने नयाँ उद्योगहरुको दर्ता र नविकरण विद्युतीय प्रणालीबाट गरी औधोगिक तथ्याङ्क अध्यावधिक गर्नमा सहजीकरण गर्नको लागि सफ्टवेयर निर्माण गरिनेछ ।यो कार्यक्रम गर्न निम्न कृयाकलापहरु गरिनेछ ।

क. विषय विज्ञहरुको सहयोगमा कार्यक्षेत्रगत शर्त (ToR) तयार गर्ने ।
ख. कन्सल्ट्यान्ट छनौटको आधारहरु तयार पार्ने र सूचना प्रकाशन गर्ने ।
ग. संस्थाको छनौट गरि कार्य संचालनको व्यवस्था मिलाउने ।
घ. कन्सल्ट्यान्ट मार्फत सफ्टवेयर निर्माण कार्य गर्ने ।
ङ. कन्सल्ट्यान्टबाट मसौदा प्रतिवेदन प्राप्त गर्ने सो प्रतिवेदनको अध्ययन गर्ने ।
च. कन्सल्ट्यान्टलाई तयार भएको सफ्टवेयरको प्रस्तुती गर्न लगाउने र सुझावको आधारमा परिमार्जन गरी अन्तिम सफ्टवेयर प्राप्त गर्ने ।
छ. कन्सल्ट्यान्ट मार्फत सफ्टवेयर संचालन सम्बन्धी सम्वन्धित जिल्ला घरेलु तथा साना उद्योग कार्यालय/विकास समिती, उद्योग वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालय र मंत्रालयका कर्मचारीहरुको दक्षता अभिवृद्धि तालिमको दिने ।

## ७.२ विपन्नमुखी आयमूलक सीप विकास तालिम

गरिवीको रेखामुनी रहेका विपन्नवर्गहरुमा सीप विकास गरी आय-आर्जन तथा रोजगारी श्रृजनाबाट गरिवी निवारणमा सहयोग पुर्याउने उद्देश्यले यो कार्यक्रम सञ्चालन गरिनेछ।

क. कार्यक्रम संचालन र सहभागी छनौटका निम्न सूचकहरु तयार गर्ने र यसैको आधारमा स्थानीय तहहरुसँगको समन्वयनमा तालिमको माग संकलन गर्नु पर्नेछ ।
   १. उमेर १६ देखि ४० वर्षको विपन्न घरपरिवारका सदस्य
   २. नेपाली नागरिक
   ३. साधारण लेखपढ गर्न सक्ने
   ४. तालिम पश्चात व्यवसाय सञ्चालन गर्ने इच्छा भएको
ख. स्थानीय निकायको समन्वयनमा सहभागी छनौट गर्ने ।
ग. तालिम कार्यक्रमको लागत अनुमान तयार गर्ने ।
घ. स्थानीय स्रोत साधन र सीपको पहिचान गरी प्रशिक्षार्थीलाई मागको आधारमा सीप विकास तालिम सञ्चालन गर्ने ।
ङ. घरेलु कार्यालयहरुले संचालित तालिम स्थानीय तहसँग समन्वय गरी कार्यक्रमहरुको अनुगमन गर्ने र अनुगमनको क्रममा देखिएका सुधार गर्नु पर्ने कुराहरुमा सुझाब दिने ।
च. स्थानीय तहहरुलाई जिम्मेवार वनाउन सहजिकरण गर्ने ।

छ. तालिम समापन भए पश्चात तालिम सम्पन्न प्रतिवेदन तयार पार्ने वा पार्न लगाउने । एक/ एक प्रति तालिम प्रतिवेदन निर्देशनालयलाई र मन्त्रालयमा पठाउने ।

ज. तालिम पश्चात सहभागी प्रशिक्षार्थी मध्ये कम्तिमा १० प्रतिशतले उद्यम विकास कार्य योजना बनाइ उद्यम शुरु गरेको हुनेछ ।

## ७.३ मुक्त कमैया, कम्लरी, माझी, कुमाल, हलिया तथा लोपन्मुख , सिमान्तकृतहरुलाई सीप मूलक तालिम

समाजमा पछाडी परेका तथा अबसरबाट बन्चितहरुलाई आर्थिक कृयाकलापमा संलग्न गराइ संवृद्धितर्फ अगाडि बढन प्रेरित गर्न यो कार्यक्रम गरिनेछ।

क. कार्यक्रम संचालन र सहभागी छनौटका निम्न सूचकहरु तयार गर्ने र यसैको आधारमा स्थानीय तहहरुसँगको समन्वयनमा तालिमको माग संकलन गर्नु पर्नेछ।

१. उमेर १६ देखि ४० वर्षको मुक्त कमैया, कम्लरी, माझी, कुमाल, हलिया तथा लोपन्मुख, सिमान्तकृतहरु

२. नेपाली नागरिक

३. साधारण लेखपढ गर्न सक्ने

४. तालिम पश्चात व्यवसाय सञ्चालन गर्ने इच्छा भएको

ख. स्थानीय निकायको समन्वयनमा सहभागी छनौट गर्ने ।

ग. तालिम कार्यक्रमको लागत अनुमान तयार गर्ने ।

घ. स्थानीय स्रोत साधन र सीपको पहिचान गरी प्रशिक्षार्थीलाई मागको आधारमा सीप विकास तालिम सञ्चालन गर्ने ।

ङ. घरेलु कार्यालयहरुले संचालित तालिम स्थानीय तहसँग समन्वय गरी कार्यक्रमहरुको अनुगमन गर्ने र अनुगमनको क्रममा देखिएका सुधार गर्नु पर्ने कुराहरुमा सुझाव दिने ।

च. स्थानीय तहहरुलाई जिम्मेवार वनाउन सहजिकरण गर्ने ।

छ. तालिम समापन भए पश्चात तालिम सम्पन्न प्रतिवेदन तयार पार्ने वा पार्न लगाउने । एकएक प्रति तालिम / प्रतिवेदनउद्योग, वाणिज्य तथा उपभोक्ता संरक्षण हित निर्देशनालय र मन्त्रालयमा पठाउने ।

तालिम पश्चात सहभागी प्रशिक्षार्थी मध्य कम्तिमा १० प्रतिशतले उद्यम विकास कार्ययोजना बनाइ उद्यम शुरु गरेको हुनेछ ।

## ७.४ सीप विकास तथा रोजगार कार्यक्रम भिन्न क्षमता, एकल महिला, दलित तथा जनजाती

भिन्न क्षमताको पहिचानबाट जागरुक गराइ आय आर्जन गरी उत्साहतर्फ लाने र हीन भावना तथा सोचबाट हटाई सीप विकास मार्फत रोजगारको सिर्जना गर्न यो कार्यक्रम गरिनेछ ।

क. घरेलु तथा साना उद्योग कार्यालयहरुले कार्यक्रम संचालन र सहभागी छनौटका निम्न सूचकहरु तयार गर्ने यसैको आधारमा स्थानीय तहहरुको समन्वयनमा तालिमको माग संकलन गर्ने ।

१. उमेर १६ देखि ४० वर्षको भिन्न क्षमता, एकल महिला, दलित तथा जनजाती

२. नेपाली नागरिक

३. साधारण लेखपढ गर्न सक्ने
४. तालिम पश्चात व्यवसाय सञ्चालन गर्ने इच्छा भएको
५. स्थानीय निकायको समन्वयनमा सहभागी छनौट गर्ने ।

ख. तालिम कार्यक्रमको लागत अनुमान तयार गर्ने ।

ग. स्थानीय स्रोत साधन र सीपको पहिचान गरी प्रशिक्षार्थीलाई मागको आधारमा सीप विकास तालिम सञ्चालन गर्ने ।

घ. घरेलु कार्यालयहरुले संचालित तालिम स्थानीय तहसँग समन्वय गरी कार्यक्रमहरुको अनुगमन गर्ने र अनुगमनको क्रममा देखिएका सुधार गर्नु पर्ने कुराहरुमा सुझाब दिने ।

ङ. स्थानीय तहहरुलाई जिम्मेवार वनाउन सहजिकरण गर्ने ।

च. तालिम समापन भए पश्चात तालिम सम्पन्नताको प्रतिवेदन तयार पार्ने वा पार्न लगाउने । एक /(एक प्रति तालिम प्रतिवेदन निर्देशनालयलाई र मन्त्रालयमा पठाउने ।

तालिम पश्चात सहभागी प्रशिक्षार्थी मध्य कम्तिमा १० प्रतिशतले उद्यम विकास कार्य योजना बनाइ उद्यम शुरु गरेको हुनेछ ।

## ७.५ जिल्ला स्तरमा लघु , घरेलु तथा साना उद्यमीहरुलाई प्रविधि हस्तान्तरण

नयाँ सृजना भएका तथा स्तरोन्नती भएका उद्यमीहरुलाई प्रविधि हस्तान्तरण गरी उद्यम/उद्योगको विकास र विस्तारमा टेवा पुर्याई रोजगारको बृद्धि मार्फत गरीबी न्यूनिकरणमा सहयोग गर्ने उद्देश्यले यो कार्यक्रम गरिनेछ। कार्यक्रम निम्नानुसार गरिनेछ ।

क. घरेलु तथा साना उद्योग कार्यालय /समितिको कार्यालयले सञ्चालन गरेको सीप, तालिम र गरिवी निवारणका लागि लघु उद्यम विकास कार्यक्रम अन्तरगत सृजना तथा स्तरोन्नति भएका उद्यमीहरु सँग सम्बन्धित प्रविधि (मेशिन औजार) उद्यमीहरु मध्ये आवश्यकताको आधारमा प्रचलित कानुन बमोजिम खरिद गरी उपलब्ध गराउन सकिनेछ ।

ख. गरिवी निवारणका लागि लघु उद्यम विकास कार्यक्रम अन्तरगतका उद्यमीहरुलाई, प्रविधि हस्तान्तरण गर्दा सम्बन्धित सेवा प्रदायक संस्थाको सिफारिशका आधारमा गर्ने ।

ग. प्रविधि (मेशिन औजार) को खरिद मूल्यको २० प्रतिशत मूल्य सम्बन्धित उद्यमीको साझेदारी हुनुपर्नेछ ।

घ. स्थानीय तहहरुको समन्वयमा प्रविधि हस्तान्तरण गर्ने ।

ङ. प्रविधि हस्तान्तरण कार्य सम्पन्नताको प्रतिवेदन तयार पार्ने र निर्देशनालय र मन्त्रालयलाई एक / एक प्रति पठाउने ।

च. जिल्ला घरेलु कार्यालय, स्थानीय तह, निर्देशनालय र मन्त्रालयले प्रविधि प्राप्त गरेका उद्यमहरुको स्थलगत कार्य संचालनको अनुगमन गर्ने ।

प्रविधि हस्तान्तरण पछि कम्तिमा १० प्रतिशत उद्यमीहरुले आफ्नो व्यवसायको स्तरोन्नती गरी संचालन गरेको हुनेछ । यसबाट उत्पादनको गुणस्तरमा बृद्धि, रोजगारीमा बृद्धि, नाफामा बृद्धि जस्ता सूचकहरुमा परिवर्तन भएको हुनेछ ।

## ७.६ उद्योग दिवस मनाउने

ऐतिहासिक जानकारी तथा उद्योग स्थापना सम्बन्धी प्रचार प्रसार गरी जनसहभागिता अभिवृद्धि गर्ने ।

क. उद्योग दिवस मनाउन अन्य कार्यालय तथा सरोकार वाला संघ संस्थालाई कार्यक्रमको जानकारी गराइ तैयारी गर्ने ।

ख. प्रचार प्रसार गर्ने ।

ग. उद्योग स्थापनाको दिन भेला वा गोष्ठी वा प्रर्दशनी वा प्रभातफेरी लगायतका आदि कार्यक्रम संचालन गर्न सकिनेछ ।

घ. प्रतिवेदन तयार गर्ने ।
ङ. उद्योग दिवस हरेक मंसिर ९ गते मनाउनु पर्नेछ ।

## ७.७ औद्योगिक अवलोकन भ्रमण

यस कार्यक्रमबाट उद्योगको स्थापना र संचालनमा आपसी छलफल अनुभवको आदान प्रदानबाट नयाँ विषयको ज्ञान हासिल हुने र आपसी सदभाव र बजारीकरणमा सुविधा पुग्नेछ ।

क. उपयुक्त स्थान उद्योग/उद्यम र सहभागी छनौट गर्ने ।
ख. अवलोकन भ्रमणको महत्वबारे छलफल गर्ने ।
ग. योजना बनाई भ्रमण गर्ने ।
घ. सहभागि सबैबाट भ्रमण अनुभवको आदान प्रदान सहित प्रतिवेदन तयार पार्ने ।

अवलोकन भ्रमणबाट प्राप्त अनुभवका आधारमा भ्रमण टोलीवाट सुझाव सहितको प्रतिवेदन पेश गर्नु पर्नेछ।

## ७.८ उद्यमीहरुको समस्या र समाधान विषयक अन्तरकृर्या कार्यक्रम

उद्योग स्थापना, संचालन तथा बजारिकरणमा समस्या पहिचान गरी उद्योग विकास रणनीति बनाई संचालनमा सहजीकरण गर्न यो कार्यक्रम गरिनेछ ।यो कार्यक्रम निम्नानुसार गरिनेछ ।

क. सरोकारवाला र अन्य संघ संस्था तथा विषय विज्ञसँग कार्यक्रम वारे छलफल गर्ने ।
ख. अन्तरकृया कार्यक्रम संचालनको तयारी गर्ने ।
ग. विषय विज्ञ मार्फत कार्यपत्र पेश गर्ने व्यवस्था मिलाउने ।
घ. अन्तरकृयामा प्रस्तुत भएका सुझावमा आफ्नो राय सहित प्रतिवेदन तयार पार्ने ।
ङ. प्रतिवेदन निर्देशनालय र मन्त्रालयमा पठाउने ।
च. अन्तरकृया कार्यक्रम गर्दा मन्त्रालय र निर्देशनालयलाई जानकारी गराउने ।

जिल्लाबाट प्राप्त प्रतिवेदनको अध्ययन गरी उद्योग , वाणिज्य तथा उपभोक्ता हित निर्देशनालयले निम्नानुसार गर्ने व्यवस्था मिलाउने ।

क. समग्र प्रतिवेदनको राय सुझाव सहित प्रतिवेदन तयार पार्ने ।
ख. सरोकारवाला निकाय, संघ संस्था तथा विषय विज्ञसँग छलफल गरी अन्तरकृर्या कार्यक्रम तय गर्ने र अन्तरकृया कार्यक्रममा जिल्लामा भएका निचोडहरु पनि प्रस्तुत गर्ने ।
ग. अन्तरकृया कार्यक्रमबाट प्राप्त राय सुझाव सहित निर्देशनालयको धारणा संलग्न गरी प्रतिवेदन तयार पारी मन्त्रालयमा पठाउने ।

सचिव

## ७.९ भगत सर्वजित परम्परागत शील्प व्यवसाय प्रवर्द्धन तालिमः

विपन्न, दलित, जनजाती तथा वहिष्करणमा परेका व्यक्तिहरुको सीप प्रर्वद्धन गर्दै उद्यम विकास कार्यमा सहभागि गराइ जीवनस्तरमा अभिवृद्धि गर्ने ।

क. घरेलु तथा साना उद्योग कार्यालयहरुले कार्यक्रम संचालन र सहभागी छनौटका निम्न सूचकहरु तयार गर्ने यसैको आधारमा स्थानीय तहहरुको समन्वयनमा तालिमको माग संकलन गर्ने ।

१. उमेर १६ देखि ४० वर्षको विपन्न, दलित, जनजाती तथा वहिष्करणमा परेका व्यक्तिहरु
२. नेपाली नागरिक
३. साधारण लेखपढ गर्न सक्ने
४. तालिम पश्चात व्यवसाय सञ्चालन गर्ने इच्छा भएको

ख. स्थानीय निकायको समन्वयनमा सहभागी छनौट गर्ने ।
ग. तालिम कार्यक्रमको लागत अनुमान तयार गर्ने ।
घ. स्थानीय स्रोत साधन र सीपको पहिचान गरी प्रशिक्षार्थीलाई मागको आधारमा सीप विकास तालिम सञ्चालन गर्ने ।
ङ. घरेलु कार्यालयहरुले संचालित तालिम स्थानीय तहसँग समन्वय गरी कार्यक्रमहरुको अनुगमन गर्ने र अनुगमनको क्रममा देखिएका सुधार गर्नु पर्ने कुराहरुमा सुझाव दिने ।
च. स्थानीय तहहरुलाई जिम्मेवार वनाउन सहजिकरण गर्ने ।
छ. तालिम समापन भए पश्चात तालिम सम्पन्नताको प्रतिवेदन तयार पार्ने वा पार्न लगाउने । एक - एक प्रति तालिम प्रतिवेदन निर्देशनालयलाई र मन्त्रालयमा पठाउने ।

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य
ख. छलफल र तालिमका विषयवस्तु,
ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,
घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,
ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति,
च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख

## ७.१० व्यवस्थापन सचेतना तथा सुधार तालिम

व्यवसाय संचालन गरीरहेका उद्योगी व्यवसायहरुको व्यवस्थापकिय सिप विकास मार्फत थप रोजगार सृजना तथा व्यवसाय विस्तारमा सहयोग पुराउने ।

क. तालिम शुरुहुनु पुर्व कार्य क्षेत्रको छनौट गरी कार्यक्रम प्रवर्धन तथा प्रचार प्रसार गर्ने
ख. भई रहेका उद्योगी व्यवसायीहरुको आवश्यकता पहिचान गर्ने
ग. स्थानीय उद्योग बाणिज्य संघ उद्योग संघ व्यापार संघ लगायत संस्था सगं समन्वयन गरी तालिम संचालन गर्ने
घ. यि क्रियाकपालहरु पहिलो दोस्रो र तेस्रो चौमासिक मा नियमित रुपमा संचालन गर्ने
ङ. कार्यक्रम सम्पन्नता प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने

उद्यमी तथा व्यवसायीको व्यवस्थापकिय सिप अभिबृद्धि भै थप रोजगारी सृजना र व्यवसायविस्तारमा टेवा पुग्नेछ । कम्तीमा ४० प्रतिशत सहभागी उद्यमीले थप रोजगारी सृजना गर्नेछन् । तालिम प्रतिबेदन, बार्षिक कार्य प्रगती प्रतिबेदन तथा प्रत्यक्ष फिल्ड अनुगमन ।

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य
ख. छलफल र तालिमका विषयवस्तु,
ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,
घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,
ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति,
च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख

## ७.११ ग्रामिण उद्यमशिलता प्रबर्धन तालिम

नविनतम एवं सृजनात्मक सोच भएका ग्रामिण क्षेत्रका युवाहरुललाई स्वरोगार एवं व्यवसाय सिर्जना र विस्तारमा सहयोग पुऱ्याउनु यस कार्यक्रमको उद्देश्य रहनेछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु संचालन गरिनेछ ।

क. प्रतिष्ठान स्वयंले ग्रामिण क्षेत्रका युवा लक्षित गरी कार्यक्षेत्रको पहिचान गर्ने ।
ख. तालिम संचालन समितिको नियमित बैठक बसी तालिम प्रभावकारीताको लागी सुझाब लिने ।
ग. कार्यक्रमको प्रर्वद्धन गरी सहभागी संकलन गर्ने ।
घ. सचेतना अभिमुखिकरण गोष्ठी संचालन गर्ने ।
ङ. उद्यमशिलता बुट क्याम्प संचालन गर्ने ।
च. प्राविधक सहयोग तथा परामर्श सेवा मार्फत उद्यमी सृजना गर्ने ।
छ. यस कार्यक्रम अन्तरगतका सबै क्रियाकलाप माघ फाल्गुण भित्रमा सम्पन्न गर्ने ।
ज. कार्यक्रम सम्पन्न प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने ।

प्रति तालिम ५ जना नविनतम सोच भएका उद्यम व्यवसाय सृजना तथा विस्तार गरीने छ जसले ५ जना सम्मलाई रोजगार दिएको हुनेछ र बाकी सहभागी मध्ये ४० प्रतिशतले व्यवसाय सिर्जना गर्नेछन् । यसको लागी मापन सूचकमा तालिम प्रतिबेदन, बार्षिक कार्य प्रगती प्रतिबेदन तथा प्रत्यक्ष फिल्ड अनुमगन हुनेछ ।

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य
ख. छलफल र तालिमका विषयवस्तु,
ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,
घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,
ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति,



सचिव

च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख

## ७.१२ उद्यमशिलता विकास प्रशिक्षक प्रशिक्षण तालिम

दक्ष उद्यम विकास प्रशिक्षक उत्पादन गरी स्वरोजगार सिर्जना गर्नु यस कार्यक्रमको उद्देश्य रहेको छ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. मन्त्रालय, घरेलु कार्यालयहरु एवं स्थानिय निकायसंग समन्वय गरी तालिम प्रवर्द्धन एवं सहभागी छनौट गर्ने ।
ख. उद्यमशिलता विकासको क्षेत्रमा कार्य गर्ने संघ संस्थाको क्षमता विकासको लागि आवश्यकता तथा मागको आधारमा सहभागी छनौट गर्ने ।
ग. पाठ्यक्रम विकास गरी प्रशिक्षक प्रशिक्षण तालिम संचालन गर्ने ।
घ. यो कार्यक्रम मंसिर भित्र सम्ममा सम्पन्न गर्ने
ङ. कार्यक्रम सम्पन्नता प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने ।

उद्यम तथा रोजगारी सृजनाको क्षेत्रमा संलग्न कम्तीमा २० जना दक्ष प्रशिक्षक विकास गर्ने सहभागीहरु प्रशिक्षक भै कम्तिमा एउटा तालिम संचालन गरेका हुनेछन् । जसबाट रोजगारी सिर्जना तथा व्यवसाय प्रवर्द्धन र विकासमा सहयोग पुग्नेछ ।

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य
ख. छलफल र तालिमका विषयवस्तु,
ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,
घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,
ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति,
च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख ।

## ७.१३ उद्यमी भेला तथा परामर्श कार्यक्रम

सेवाग्राहीहरुको आवश्यकता र समस्यामा आधारीत सेवा प्रवाहमा सुधार ल्याउनु यस कार्यक्रमको उद्देश्य रहनेछ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. प्रतिष्ठानद्धारा सिर्जना भएका उद्यमीहरुको छनौट गर्ने ।
ख. गोष्ठीको आयोजना गर्ने ।
ग. व्यवसायीक समस्याहरु पत्ता लगाई आवश्यक परामर्श सेवा प्रदान गर्ने ।
घ. यि क्रियाकलापहरु फाल्गुण भित्र सम्म सम्पन्न गर्ने ।
ङ. कार्यक्रम सम्पन्न प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने ।



सचिव

नयाँ स्टार्टअप उद्यमीहरुको समस्या पत्ता लगाई समाधानमा सहजीकरण गरी व्यवसाय विस्तारमा सहयोग पुग्नेछ । तालिम प्रतिबेदन, बार्षिक कार्य प्रगती प्रतिबेदन तथा प्रत्यक्ष फिल्ड अनुगमनबाट प्रभावकारीता मापन गरीनेछ ।

## ७.१४ प्रविधि हस्तान्तरण तथा स्तरोन्नती तालिम

लघु तथा साना व्यवसाय एवं नया स्टार्टअप व्यवसायलाई प्रविधि मैत्री बनाउन सहयोग गर्नु यस कार्यक्रमको मूल उद्देश्य रहेको छ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. प्रविधि हस्तान्तरण तथा स्तरोन्नती तालिम कार्यविधि निमार्ण गरी स्वीकृत गराउने ।
ख. कार्यक्षेत्र छनौट तथा कार्यक्रम प्रचार प्रसार गर्ने ।
ग. प्रतिष्ठानले प्रदान गरेका ग्रामिण उद्यमशिलता प्रर्वद्धन तथा उद्यमशिलता विकास तालिमबाट सृजना भएका उद्यमीहरुको लागी आवश्यकताको आधारमा सहभागी छनौट गर्ने ।
घ. कार्यविधि एवं नियमानुसार प्राविधिक तालिम तथा प्रविधि हस्तान्तरण गर्ने ।
ङ. कार्यक्रम सम्पन्नता प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने ।

व्यवसायको सुधार तथा उत्पादकत्व अभिबृद्धि हुनेछ । थप रोजगारी बृद्धि तथा नाफामा बृद्धि प्रतिष्प्रधात्मक क्षमतामा विकास जस्ता सूचकहरुमा परिवर्तन भएको हुनेछ । जसको मापन प्रतिबेदन, बार्षिक कार्य प्रगती प्रतिबेदन तथा प्रत्यक्ष फिल्ड अनुगमनबाट गरीने छ ।

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य
ख. छलफल र तालिमका विषयवस्तु,
ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,
घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,
ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति
च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख

## ७.१५ उद्यम संचालन, ब्यवसायिक योजना निर्माण तथा ब्यवस्थापन सम्बन्धी तालिम

उद्यमशिल क्षमताको विकास मार्फत उद्यम व्यवसाय सृजना तथा स्वरोजगार सिर्जना गर्नु यस कार्यक्रमको उद्देश्य रहेको छ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. तालिम शुरु हुनु पुर्व कार्य क्षेत्रको छनौट गरी कार्यक्रम प्रवर्द्धन तथा प्रचार प्रसार गर्ने ।
ख. प्रदेश भरका जिल्लाहरुमा मागको आधारमा सहकारी संस्था, व्यवसायीक संघ संस्था वा प्रतिष्ठान आफैले संभाव्य उद्यमीहरुको पहिचान तथा छनौट गर्ने ।

ग. प्राप्त आवेदनको आधारमा एक दिने सचेतना गाष्ठी आयोजना गरी अभिमुखीकरण गर्ने ।
घ. गोष्ठीबाट अति संभाव्य एवं इच्छुक सहभागी छनौट गरी मागमा आधारित भै उद्यमशिलता विकास तालिम संचालन गर्ने ।
ङ. प्राविधिक सिप विकास तथा बजार लिंकेजमा सहजीकरण गर्ने ।
च. सबै क्रियाकलापहरु पहिलो दोस्रो र तेस्रो चौमासिक मा नियमित रुपमा संचालन गर्ने ।
छ. कार्यक्रम सम्पन्नता प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने

तालिममा सहभागी व्यक्ति मध्ये कम्तीमा ४० प्रतिशत व्यक्तिले व्यवसाय सिर्जना गर्नेछन् । तलिम संचालन पश्चात नियमित अनुगमन तथा परामर्श सेवा बाट व्यवसाय सिर्जना,रोजगारी अभिबृद्धि उत्पादन गुणस्तरमा बृद्धि भएको देखिने छ । तालिम प्रतिबेदन, बार्षिक कार्यप्रगती प्रतिबेदन तथा प्रत्यत्क्ष फिल्ड अनुगमनबाट मापन गरीने छ ।

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य
ख. छलफल र तालिमका विषयवस्तु,
ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,
घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,
ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति
च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख

## ७.१६ ललितकला र ,वुद्धकालिन र वुद्धसंस्कृतिमा आधारित काष्ठकला मुर्तिकला सम्बन्धी कलाकार उत्पादन गर्ने

वुद्धकालिन ऐतिहासिक सम्पदाको संरक्षण, सम्वर्द्धन र प्रर्वद्धन भइ संस्कृतिको प्रवर्द्धन हुनुका साथै रोजगारी तथा आय आर्जन गर्न मद्दत गर्ने ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. मन्त्रालय र निर्देशनालयले वुद्धकालिन संस्कृतिमा आधारित काष्ठकला, ललितकला तथा मुर्तिकला सम्बन्धी जानकार विज्ञ व्यक्ति र संस्थासँग छलफल गरी जानकारी लिने ।
ख. मन्त्रालयको पहलमा पहिचान भएको कला संस्कृतिको संभाब्य स्थान र त्यस्ता ज्ञान सीप भएका कलाकारको खोजि गर्ने ।
ग. विज्ञहरुको छलफल तथा सहयोगमा प्रशिक्षक र प्रशिक्षार्थीहरुको छुट्टा छुट्टै छनौटका आधारहरु तयार पार्ने ।
घ. दक्ष प्रशिक्षक र ईच्छुक सहभागीहरुको लागि कपिलवस्तु, रुपन्देही, नवलपरासी जिल्लाहरुमा काष्ठकला, ललितकला तथा मुर्तिकलाको तालिम सम्बन्धी सूचना प्रकाशित गर्ने ।
ङ. लागत अनुमान तयार गर्ने ।
च. स्थानीय स्रोत साधन र सीपको परिचान गरी प्रशिक्षार्थीलाई सीप विकास तालिम सञ्चालन गर्ने र प्रविधि हस्तान्तरण गर्नु पर्ने भए सो को व्यवस्था मिलाउने ।
छ. घरेलु कार्यालयहरुले संचालित तालिम कार्यक्रमहरुको अनुगमन गर्ने र स्थानीय तहहरुलाई पनि अनुगमनको लागि समन्वय गर्ने ।

ञ. सहभागीहरुलाई तालिम पश्चात व्यवसाय दर्ता गर्न र संचालन गर्न प्रोत्साहान गर्ने काम र जिम्मेवारी स्थानीय तह र घरेलु कार्यालयहरुको हुने कुरा मनन गर्ने ।
झ. तालिम समापन भए पश्चात तालिम सम्पन्नताको प्रतिवेदन तयार पार्ने वा पार्न लगाउने । एक प्रति तालिम प्रतिवेदन निर्देशनालयलाई र मन्त्रालयमा पठाउने ।
ञ. निर्देशनालय र मन्त्रालयले प्राप्त प्रतिवेदनको अध्ययन गरी आवश्यकता अनुसार सम्वन्धित क्षेत्रको अनुगमन गर्ने ।

यस कार्यक्रम कार्यान्वयन भए पश्चात सहभागी प्रशिक्षार्थी मध्य कम्तिमा ८० प्रतिशतले उद्यम कार्य योजना बनाइ उद्यम शुरु गरेको हुनेछ ।

उल्लेखित कार्यक्रम सम्पन्न भए पश्चात प्रगति प्रतिवेदन पेश गर्दा समावेश गरिने विषयहरु

क. कार्यक्रमको उद्देश्य
ख. छलफल र तालिमका विषयवस्तु,
ग. कार्यक्रम संचालन भएको स्थान, अवधि र मिति देखिने ब्यानर सहभागीको फोटो तथा अन्य दृश्यहरु,
घ. अवलोकन भ्रमण गरिएका स्थान, भ्रमणमा भएका छलफलका विषयवस्तु ,
ङ. कार्यक्रमको बजेट, भौतिक प्रगति र वित्तीय प्रगति
च. प्रत्येक तालिमका सहभागीहरुको नाम, ठेगाना समेतको अभिलेख

## ७.१७ ऐन, नीति , नियमावली , कार्यविधि तथा निर्देशिका निर्माण तथा परिमार्जन

प्रदेश अन्तरगत संचालन गरिने कार्यहरु प्रदेश ऐन -नियम अनुसार संचालन गर्न र कार्यमा एकरुपता ल्याउनमा सहजीकरण गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहनेछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. औद्योगिक व्यवसाय सम्बन्धी प्रदेशको लागि आवश्यक पर्ने विभिन्न ऐन तर्जुमा गर्ने ।
ख. निर्माण भई प्रदेश सभावाट स्वीकृत ऐनको अधिनमा रहि नियमावली तयार पार्ने ।
ग. मन्त्रालयबाट संचालन गरिने कार्यक्रमको लागि आवश्यक पर्ने कार्यविधिहरु तयार पार्ने ।
घ. ऐन, नियम र कार्यविधि तयार गर्दा विषय विज्ञहरु तथा सरोकारवालाहरु सँग छलफल गर्ने ।

उल्लिखित कार्यक्रम गर्नका लागि राय संकलन, बैठक, परामर्श सेवा, गोष्ठी, छपाइ सम्बन्धी कार्यमा विनियोजित रकम खर्च गरिनेछ ।

## ७.१८ प्रादेशिक गरिवी निवारणका लागि लघु उद्यम विकास संचालन निर्देशिका निर्माणः

प्रदेशले आफ्नै मेडपा संचालन निर्देशिका निर्माण गरी लागु गर्नु यस कार्यक्रमको उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. मन्त्रालयले प्रदेश स्तरिय मेडपा संचालन निर्देशिकाको ड्राफ्ट तयार गर्ने ।

ख. तयार पारिएको ड्राफ्ट संचालन निर्देशिका मन्त्रालयमा छलफल गरी अन्तिम रुप प्रदान गर्ने ।
ग. तयार पारिएको संचालन निर्देशिकालाई मन्त्रिस्तरिय निर्णयबाट स्वीकृत गराइ कार्यान्वयनमा लैजाने ।

उल्लिखित कार्यक्रम गर्नका लागि राय संकलन, बैठक, परामर्श सेवा, गोष्ठी, छपाइ सम्बन्धी कार्यमा विनियोजित रकम खर्च गर्न सकिनेछ ।

## ७.१९ प्रदेश मेडपा निर्देशक समितिको बैठक संचालन

प्रदेशमा मेडपा कार्यक्रम संचालन व्यवस्थित गर्नका लागि प्रदेश मेडपा निर्देशक समितिको बैठक संचालन गर्नु यस कार्यक्रमको उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. आवश्यकता अनुसार बैठक वसि मेडपा संचालनमा देखिएका अवरोधहरु हटाउन, आवश्यक निर्देशिका बनाउन, रणनैतिक योजनाहरु निर्माण गर्न मन्त्रालयलाई सहजिकरण गर्ने ।
ख. कम्तिमा ४ महिनामा एक पटक बैठक बस्ने ।

## ७.२० मेडपा संचालनको लागि सेवा प्रदायक संस्थाहरुको छनौट कार्य संचालन

संघिय सरकारबाट प्राप्त शसर्त अनुदानको रकमलाईँ १२ जिल्लाका २३ वटा क्लस्टर र १०९ वटा स्थानीय तहहरुमा संचालनको लागि आवश्यक सेवा प्रदायक संस्थाहरुको छनौट गरी कार्यसंचालन गर्ने ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. E-Submission प्रकृया मार्फत सेवा प्रदायक संस्थाहरुसँग आशय पत्र माग गर्नको लागि कार्यक्षेत्रगत शर्त (TOR ), आशयपत्र सम्बन्धी सूचना, आशय पत्र मूल्याङ्कनको आधारमा तयार पारि निर्णय गराउने.
ख. आशय पत्र E-Submission अवलम्बन गरी पेश गर्नको लागि सूचना जारी गर्ने .
ग. गरिवी निवारणको लागि लघु उद्यम विकास कार्यक्रम संचालन निर्देशिका, २०७० चौथो संशोधन तथा आशय पत्र मूल्याङ्कनको आधारमा आशय पत्र मूल्याङ्कन गर्ने.
घ. सूचिकृतभएका सेवा प्रदायक संस्थाहरुको नेपाली वर्णानुक्रमको आधारमा एउटा जिल्लाको लागि ३ देखि ६ वटा सम्मको सूची तयार गर्ने ।
ङ. सूचीकृत सेवा प्रदायक संस्थाहरुलाई सूचीकृत भएको जिल्लामा प्राविधिक र आर्थिक प्रस्ताव पेश गर्नको लागि यसै मन्त्रालयबाट राष्ट्रिय दैनिक पत्रिकामा सूचना प्रकाशन गर्ने ।
च. सूचिकृत सेवा प्रदायक संस्थाहरुको विवरण जिल्ला घरेलु कार्यालयहरुलाई पत्राचार मार्फत जानकारी गराउने ।

## ७.२१ सरोकारवाला संग अन्तरक्रिया कार्यक्रम

प्रतिष्ठानका साझेदार संस्थाहरु जस्तै स्थानिय निकाय, व्यवसायीक संघ संस्था तथा सहकारी संघ सस्थासंग सम्वन्ध विस्तार गर्नु यस कार्यक्रमको उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. प्रतिष्ठानले समन्वय तथा साझेदारीमा कार्यक्रम संचालन गर्ने स्थानिय निकाय व्यवसायी संघ संस्था तथा सहकारी संघ सस्था लगायत सरोकारवालहरुलाई पत्राचार गर्ने ।
ख. गाष्ठीको आयोजना गरी सेवा प्रवाहमा थप प्रभावकारीता ल्याउन सुझाव तथा कार्यक्रमको क्षेत्र विस्तारमा अन्तरक्रिया गर्ने ।
ग. यो कार्यक्रम जेष्ठ भित्रमा सम्पन्न गर्ने ।
ध. यसबाट प्रतिष्ठानका सेवालाई थप प्रभावकारी र व्यवहारीक एवं कार्यक्षेत्र विस्तारमा समेत सहयोग पुग्नेछ । साझेदार संस्थाहरुको सुझाब अनुसार कार्य विविधीकरण भएको हुनेछ ।

## ७.२२ तालिम पछिको अनुगमन तथा परामर्श सेवा

प्रतिष्ठानले प्रदान गरेका तालिम बाट व्यवसाय सृजना र रोजगारी सृजनाको वास्तविक तथ्यांक प्राप्त गर्नु यस कार्यक्रमको उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. कार्यक्षेत्र छनौट गर्ने ।
ख. अनुगमन फर्म फरमेट तयार पार्ने ।
ग. पूर्व प्रशिक्षार्थीहरुलाई गोष्ठीको जानकारी गराउने ।
घ. उद्यमशिलता तथा व्यवस्थापन तालिम लिएका पूर्व सहभागीहरुलाई नियमित परामर्श तथा अनुगमन गर्ने (व्यक्तिगत तथा समूहगत) ।
ङ. यी क्रियाकलापहरु पहिलो दोस्रो र तेस्रो चौमासिक मा नियमित रुपमा संचालन गर्ने ।
च. यसबाट व्यवसाय सिर्जना र रोजगारी सिर्जनाको वास्तविक तथ्यांक प्राप्त हुनेछ र प्रक्रियामा रहेका उद्यमीहरुलाई व्यवसाय शुरु गर्न थप सहयोग मिल्नेछ । व्यवसाय शुरु तथा विस्तारका अवरोधहरु पत्ता लगाई थप सेवा प्रवाहमा सहयोग पुग्नेछ । यि क्रियाकलापबाट नै प्रतिष्ठानको सेवा प्रभावकारीता मापन गर्नेहुदा तालिम प्रतिबेदन, बार्षिक कार्य प्रगती प्रतिबेदन तथा प्रत्यक्ष फिल्ड अनगमनबाट सुचकको मापन गरिनेछ ।

## ७.२३ वार्षिक तथा अर्धवार्षिक योजना तर्जुमा तथा प्रगति समीक्षा गोष्ठी

लक्ष्य अनुसारको प्रगती हासिल भए नभएको समिक्षा गर्नु यस कार्यक्रमको उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. सरोकारवाल संघ संस्था तथा नियमन निकायको उपस्थितीमा प्रगती समिक्षा गर्ने ।
ख. बार्षिक रुपमा दोस्रो र तेस्रो चौमासिक मा संचालन गर्ने
ग. प्रतिष्ठानको बार्षिक लक्ष्य अनुसारको प्रगती प्रतिवेदन । कार्यसंचालनमा देखा परेका समस्या समाधानमा समेत सहयोग हुनेछ ।कार्य प्रगती प्रतिवेदनबाट परिवर्तन भएका सुचकहरु मापन हुनेछ ।

## ७.२४ प्रदेशमा संचालनमा रहेका उद्योगहरुको निरीक्षण र अनुगमन

प्रदेशमा संचालनमा रहेका ठूला तथा मझौला उद्योगहरुले उत्पादन गर्ने वस्तुहरुको गुणस्तरियता कायम गरी बजारमा प्रयाप्त उपलब्धताको सुनिश्चतता गर्नु यस कार्यक्रमको उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. निर्देशनालयले आवश्यकता अनुसार सकेसम्म सबै ठूला उद्योगहरुको अनुगमन तथा निरिक्षण गर्ने ।
ख. निरिक्षणको क्रममा देखिएका सुधार गर्नु गर्ने कुराहरुमा सल्लाह एवं सुझाव दिने ।
ग. नियम विपरित संचालनमा भएको भए आवश्यक कार्वाहीको लागि सिफारिश गर्ने ।
घ. मन्त्रालयले पनि आवश्यकताको आधारमा ठूला उद्योग र औद्योगिक क्षेत्रको निरिक्षण गर्ने ।
ङ. प्रदेशमा संचालित ठूला उद्योगहरुको निर्देशनालय र मन्त्रालयले अनुगमन तथा निरिक्षण गरेको प्रतिवेदन दिने र बजारमा गुणस्तरीय वस्तुको उपलब्धता भएको ।

## ७.२५ उद्यम विकास कोष स्थापना

लघु, घरेलु तथा साना उद्योगहरुलाई संचालनमा सहजिकरण र प्रवर्द्धनको लागि कोषको स्थापना गरी संचालन गर्नु यस कार्यक्रमको उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. लघु, घरेलु तथा साना उद्योग कोष संचालन नियमावली २०७६ तयार गरी सम्बन्धित निकायबाट अनुमोदन गराउने ।
ख. नियमावलीको आधारमा कोषको स्थापना गर्ने ।
ग. नियमावलीको आधारमा कोष संचालनको लागि कार्यविधि तयार पारी सम्बन्धित निकायबाट अनुमोदन गराउने ।
घ. वित्तीय निकाय छनौटको आधारमा तयार गरी कार्यविधिको आधारमा वित्तीय निकायसँग छलफल गर्ने र उपयुक्त वित्तीय निकायको छनौट गर्ने ।
ङ. मन्त्रालय र वित्तीय निकाय वीच सबै जिल्लाहरुमा यो कोष मार्फत कार्यक्रम संचालनको लागि समझदारी पत्रमा हस्ताक्षर गर्ने ।
च. कोषको बारेमा र कार्यविधिको बारेमा सबै जिल्ला घरेलु कार्यालयहरू र निर्देशनालयमा निर्देशनालयमा कार्यविधि पठाउने । सहित जानकारी
छ. लघु, घरेलु तथा साना उद्योग विकास कोष कार्यविधि अनुसार संचालन गर्नमा जिल्ला कार्यालयहरुलाई मन्त्रालय र निर्देशनालयले सहजिकरण गर्ने ।

यो कार्यक्रम सम्पन्न भए पश्चात

क. कोष संचालन नियमावली तयार भएको हुने ।
ख. कोष संचालन कार्यविधि तयार भएको हुने ।
ग. उपयुक्त वित्तिय संस्थासँग समझदारी पत्रमा हस्ताक्षर भएको हुने ।
घ. निर्देशनालय र जिल्ला घरेलु कार्यालयलाई कोषको नियमावली र कार्यविधि बारेमा जानकारी भएको हुने ।
ङ. लघु, घरेलु तथा साना उद्योग विकास कोष २०७६ संचालनमा आएको हुने ।

## ७.२६ आवश्यकताको आधारमा GESIMIS सम्बन्धी क्षमता अभिवृद्धि कार्यक्रम संचालन गर्ने

घरेलु कार्यालयहरु तथा सेवा प्रदायक संस्थामा कार्यरत कम्प्यूटर अपरेटरहरुको GESIMIS संचालनमा दक्षता बढाउनु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ

क. मन्त्रालयले जिल्ला घरेलु कार्यालयहरुसँग त्यहाँ कार्यरत कम्प्युटर अपरेटरहरुको GESIMIS संचालनमा सीपदक्षता / विकासको लागि जानकारी उपलब्ध गराउन सहजिकरण गर्ने ।

ख. मन्त्रालयले घरेलु कार्यालय मार्फत सेवा प्रदायक संस्थाका कम्प्यूटर अपरेटरहरुको GESIMIS संचालनमा सीपआवश्यक जानकारी प्राप्त दक्षताको विकासको लागि/ गर्ने ।

ग. आवश्यकताको आधारमा GESIMIS तालिमको आयोजना गर्ने ।

घ. मन्त्रालयको उद्योग विकास शाखा र निर्देशनालयले गरिएको तालिमको प्रभावकारी कार्यान्वयनको अनुगमन जिल्ला र सेवा प्रदायक संस्थाको कार्यालयमा गर्ने ।

ङ. अनुगमनको क्रममा देखिएका सुधार गर्नु पर्ने कुराहरुमा सुझाव र सल्लाह दिने ।

च. शाखा र निर्देशनालयले गर्ने निरिक्षणको क्रममा देखिएका वस्तुस्थितीको बारेमा मन्त्रालयमा प्रतिवेदन वुझाउने ।

## ७.२७ उद्यमीहरुको समस्या र समाधान विषयक अन्तरक्रिया कार्यक्रम

मेडपा र घरेलु कार्यालयहरुको सहयोगमा तथा आफै संचालनमा रहेका उद्यमीहरुको समस्या र सवलपक्ष पहिचान गरी आवश्यकताको आधारमा सहजीकरण गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. निर्देशनालयले उद्यमी, स्थानीय निकाय, व्यवसायी संघ संस्था लगायत सरोकारवालहरुको समन्वय तथा साझेदारीमा छलफल कार्यक्रम संचालन गर्ने ।

ख. छलफल कार्यक्रममा उठेका समस्या र समाधानको विषयमा व्यापक छलफल गरी निचोड तयार गर्ने र सबै सम्वन्धित साझेदार संघ सस्थाहरुलाई उनीहरुको जिम्मेवारी र भूमिकाको बारेमा पत्राचार गरी जानकारी गराउने ।

ग. सो बारेमा मन्त्रालयलाई प्रतिवेदन पेश गरी आवश्यक नीतिगत सुधार का साथै कार्यक्रमको प्रवन्धको लागि सहजीकरण गर्ने ।

## ७.२८ तालिम कार्यविधि निर्माण

तालिम संचालन, तालिम प्रभावकारीता तथा वित्तिय अनुशासनको लागी मार्गदर्शन गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. तालिम तथा सेवा छनौट गर्ने ।

ख. आन्तरीक तथा बाह्य स्रोतबाट तालिम कार्य विधि निमार्ण गर्ने ।

ग. यो कार्य पहिलो चौमासिक भाद्र महिनासम्म सम्पन्न गर्ने ।

घ. तालीम संचालन कार्यविधि स्विकृत गराउने ।

उल्लिखित कार्यक्रम गर्नका लागि राय संकलन, बैठक, परामर्श सेवा, गोष्ठी, छपाइ सम्बन्धी कार्यमा विनियोजित रकम खर्च गर्न सकिनेछ

## ७.२९ आन्तरिक उत्पादन र कोशेलीघर प्रवर्द्धन कार्यक्रम

कोशेलीघरको निर्माण र सञ्चालन पछि स्वदेशी एवं स्थानिय कच्चापदार्थमा आधारित उद्यम व्यवसायको बजारीकरणमा सहयोग पुऱ्याउनु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. कार्यक्षेत्रगत शर्त तयार पारी स्थानीय साझेदार संस्थास्थानीय तह/ छनौट गर्ने ।
ख. कार्यक्रमको प्रवर्द्धन गरी संभाव्य स्थानीय उद्यमीहरु छनौट गरी निर्माण समिति बनाउने ।
ग. निर्माण समिति तथा उद्यमीहरुलाई व्यवसाय शुरु एवं सुधार तालिमहरु संचालन गर्ने ।
घ. तुलनात्मक लाभ दिने बस्तु तथा पर्यटकीय बस्तु उत्पादनमा सहजीकरण गर्ने र भई रहेका उद्यमहरुबाट उत्पादन भएका वस्तुहरुको व्यवस्थित विक्रिवितरणमा सहजिकरण गर्ने ।
ङ. कोशेली घर निमार्ण तथा व्यवस्थापनको लागि स्थानको छनोटमा स्थानीय तहहरुसंग समन्वय र सहकार्य गर्ने ।
च. कोशेलीघरको लागत अनुमान तयार गर्ने / गराउने ।
छ. प्रतिष्ठान तथा जिल्ला घरेलु कार्यालयले कोशेली घरको अनुगमन र निरीक्षण गर्ने सो को प्रतिवेदन निर्देशनालय र मन्त्रालयमा पेश गर्ने ।
ज. ठेक्का प्रणाली वा उपभोक्ता मार्फत निर्माण कार्य गर्ने/गराउने ।
झ. आवश्यकताको आधारमा निर्देशनालय र मन्त्रालयले पनि कोशेली घरको निर्माण तथा व्यवस्थापनको अनुगमन तथा निरिक्षण गर्ने ।
ञ. कार्यक्रम सम्पन्न प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने ।

## ७.३० औद्योगिक अनुगमन तथा निरीक्षण

प्रदेशमा संचालित औद्योगिक क्षेत्र/उद्योगहरुले उत्पादन गर्ने वस्तुको गुणस्तरियता कायम गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. जिल्ला घरेलु कार्यालयहरुले स्थानीय प्रशासनको समन्वयनमा उद्योगहरुको अनुगमन तथा निरिक्षण गर्ने ।
ख. नियम अनुसार संचालनमा नरहेका उद्योगहरुलाई नियमानुसारको सचेत गराउने वा कारवाही गर्ने वा कारवाहीको लागि सिफारिश गर्ने ।
ग. एक पटक अनुगमन गर्दा भेटिएका कमि कमजोरी हटाउनको लागि अनुगमन टोलीले दिएको सुझाव कार्यान्वयन भए नभएको वुझ्नको लागि पुनः सोही उद्योगको अनुगमन गर्ने।
घ. समय समयमा वा कसैको गुनासोको आधारमा पटके अनुगमन पनि गर्ने ।
ङ. उद्योग,वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालयले पनि प्रदेश कार्यक्षेत्र भित्र रहेका औद्योगिक क्षेत्र/उद्योगको नियमित अनुगमन तथा निरिक्षण गर्ने ।

च. जिल्लाले गरेको अनुगमनको प्रतिवेदन आफ्नो सुझाव सहित तयार गरी निर्देशनालय र मन्त्रालयलाई पठाउने र निर्देशनालयले गरेको अनुगमनको प्रतिवेदन आफ्नो सुझाव सहित मन्त्रालयलाई पठाउने ।

छ. आवश्यकता भएमा जिल्ला र निर्देशनालयले पेश गरेको प्रतिवेदनको आधारमा मन्त्रालयले पनि औधोगिक क्षेत्र/ उद्योगको अनुगमन गर्ने ।

## ७.३१ उद्यम संचालनका लागि ब्यवसायिक योजना निर्माण सबन्धी कार्यविधि तयार

तालिम संचालन, तालिम प्रभावकारीता तथा वित्तिय अनुशासनको लागी मार्गदर्शन गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ । यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. तालिम तथा सेवा छनौट गर्ने ।

ख. आन्तरीक तथा बाह्य स्रोतबाट उद्यम संचालनको लागी व्यवसायीक योजना तर्जुमा तालिमको कार्यविधि निमार्ण गर्ने ।

ग. यो कार्य पहिलो चौमासिक भाद्र महिनासम्म सम्पन्न गर्ने ।

घ. कार्यविधि स्विकृत गराउने ।

ङ. यसबाट उद्यम संचालनको लागी व्यवसायीक योजना तर्जुमा तालिमको कार्यविधि निमार्ण भएको हुनेछ ।सोही अनुसार तालिमहरु संचालन भएका हुनेछन् । तालिम संचालनमा आएको पारदर्शिता र प्रभावकारीमा भएको परिवर्तन मापन सुचक हुनेछ।

## ७.३२ भवन निर्माण (दाङ)

घरेलु तथा साना उद्योग कार्यालयको आफ्नै भवन निर्माण गरी सेवाग्राहीहरुलाई दिने सुविधामा सहजता ल्याउनु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. शहरी विकास तथा भवन कार्यालयको सहयोगमा लागत स्टिमेट र डिजाइनको आधारमा भवन निर्माण कार्यमा सहजिकरण गर्ने ।

ख. प्राविधिक जनशक्तिको सहयोगमा समय समयमा अवलोकन र निरिक्षण गर्ने ।

ग. कन्टेन्जन्सी रकमवाट व्यहोर्ने गरी एकजना प्राविधिक सुपरीवेक्षकको व्यवस्था गर्ने ।

घ. निर्देशनालय र मन्त्रालयलाई समय समयमा तथ्यगत जानकारी गराउने ।

## ७.३३ अदुवा प्रशोधन केन्द्रको पूर्वाधार निर्माण (पाल्पा )

पाल्पा जिल्लामा उत्पादन हुने अदुवालाई प्रशोधन गरी निकासी गर्नमा सहयोग गर्ने जसबाट थप रोजगारको सिर्जना हुनुका साथै आम्दानीमा पनि वृद्धि गर्नमा सहजीकरण गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. घरेलु तथा साना उद्योग कार्यालय पाल्पाले पूर्वधार निर्माणका लागि स्थानीय तह र संम्भाब्य सहकारीहरुसँग समन्वय र सहकार्य गर्ने ।

ख. कार्यालयले स्थानीय तह र सहकारीहरु विचको कार्य जिम्मेवारी र भूमिका उल्लेख भएको समझदारी पत्रमा हस्ताक्षर गरी लिने दिने ।
ग. स्थान र उद्यमको लागि चाहिने पूर्वधारको ड्रइङ लेआउट र डिजाइन तयार गर्नका लागि स्थानीय तहको प्राविधिक ÷ परिचालन गर्नमा सहजिकरण गर्ने ।
घ. संस्थाका तर्फबाट स्थानीय तह र कार्यालय विचमा सम्झौता गर्ने र पूर्वाधार निर्माणको जिम्मेवारी दिने
ङ. प्राविधिक जनशक्तिको सहयोगमा नियमित निरिक्षण अनुगमन गरी पृष्ठपोषण र सुझाव दिने ।
च. निर्माण सम्पन्न पश्चात सम्बन्धित सहकारीबाट संस्थालाई हस्तान्तरण गरी सञ्चालनमा सहजिकरण गर्ने
छ. गुणस्तर कायम गर्नमा विशेष पहल गर्ने र सहजिकरण गर्ने ।
ज. निर्देशनालय र मन्त्रालयले आवश्यकताको आधारमा अनुगमन गर्ने ।

## ७.३४ माटोका भाँडा बनाउने उद्यम वा उद्यमीको आधुनिकिकरण तालिम तथा प्रविधि सहयोग

परम्परागत पेशाको रुपमा संचालित माटोको भाँडा बनाउने कार्यलाई मर्यादित र आधुनिकिकरण गरि गरिबी न्यूनिकरण र रोजगार सिर्जना गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ ।

क. जिल्ला कार्यालयहरुले स्थानीय तहसँगको सहकार्यमा माटोको भाडाँ बनाउने उद्यमहरुको तथ्याङ्क अध्यावधिक गर्ने ।
ख. माटोको भाडाँ बनाउने उद्यम उद्यमीहरुलाई राखेको आधुनिकिकरणको लागि तालिम मन्त्रालयले / सहयोगको बारेमा जानकारी गराउने ।
ग. उद्यमको आधुनिकिकरण सहयोगको लागि प्रस्ताव माग गर्न लगाउने र संम्भाब्य माटोको भाडाँ बनाउने उद्यम उद्यमीलाई/ पनि जानकारी गराउने ।
घ. सहभागी छनौटको आधार तयार पार्ने र सहभागी छनौट गर्ने र कार्यक्रम सञ्चालन गर्ने ।
ङ. प्रविधि हस्तान्तरण विधिमा कार्यालयबाट ८०% र उद्यमीबाट २०% सहभागिता हुनु पर्ने ।
च. घरेलु कार्यालयले नियमित निरिक्षण अनुगमन गर्ने र पृष्ठपोषण र सुझाव दिने । अनुगमनको प्रतिवेदन आफ्नो सुझाव सहित निर्देशनालय र मन्त्रालयमा पठाउने ।
छ. निर्देशनालय र मन्त्रालयले आवश्यकताको आधारमा अनुगमन गर्ने र आवश्यकताको आधारमा सहजिकरण गर्ने ।

## ७.३५ एक प्रदेश निर्वाचन क्षेत्र एक औद्योगिक ग्राम स्थापनाका लागि गत वर्षको पूर्व संम्भाब्यता अध्ययनको आधारमा विस्तृत अध्ययन गर्ने

प्रदेश सरकारको नीति कार्यक्रम तथा बजेट बक्तब्यमा विशेष प्राथमिकताका साथ राखिएको कार्यक्रमको आधारमा एक प्रदेश निर्वाचन क्षेत्रमा एक औधोगिक ग्राम स्थापनाको लागि विस्तृत अध्ययन गरी कार्यान्वयनमा ल्याउनु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. अघिल्लो आ.व. मा संभाव्यता अध्ययन भएको वा प्रदेश सरकारबाट औद्योगिक ग्राम घोषणा भएको मध्ये कुनै एक स्थानीय तहको एउटा स्थान छनौट गर्ने र जिल्लाले विषय विज्ञहरुको सहयोगमा कार्यक्षेत्रगत शर्त तयार गरी छनौट गर्दा सिफारिश भएका सबै स्थानीय तहहरुसँग छलफल गरेर सामुहिक निर्णयको आधारमा गर्ने ।

ख. स्थानीय तहको लागत सहभागिता हुने निश्चित भएका एक भन्दा बढीको विस्तृत अध्ययन गर्न सकिनेछ ।
ग. कन्सल्ट्यान्ट छनौटका आधार तयार पारी प्रचलित कानुन बमोजिम छनौट गर्ने ।
घ. छनौट भएको कन्सल्ट्यान्टसँग जिल्ला कार्यालयले सम्झौता गर्ने र कार्य जिम्मेवारी दिने।
ङ. मस्यौदा प्रतिवेदन वुझ्ने यसको विस्तृत अध्ययन गर्ने, यसलाई प्रस्तुतिकरण गर्न लगाउने, प्रस्तुतिकरणमा सम्बन्धित स्थानीय तहका प्रमुख लगायत प्रतिनिधि, नीजिक्षेत्र, साझेदार हुनसक्ने संघ संस्थालाई विशेष आमन्त्रण गर्ने । निर्देशनालय र मन्त्रालयलाई जानकारी गराउने ।
च. प्रस्तुतिकरणमा दिइएको सुझाबको आधारमा परिमार्जित गरिएको अन्तिम प्रतिवेदन बुझ्ने।
छ. प्रतिवेदनलाई कार्यान्वयनमा सहजिकरणको लागि निर्देशनालय, मन्त्रालय र स्थानीय तहलाइ पठाउने ।

## ७.३६ एक प्रदेश निर्वाचन क्षेत्र एक औद्योगिक ग्राम स्थापनाका लागि विस्तृत अध्ययन गर्ने

प्रदेश सरकारको नीति कार्यक्रम तथा बजेट बक्तब्यमा विशेष प्राथमिकताकासाथ राखिएको कार्यक्रमको आधारमा एक प्रदेश निर्वाचन क्षेत्रमा एक औद्योगिक ग्राम स्थापनाको लागि विस्तृत अध्ययन गरी कार्यान्वयनमा ल्याउनु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. जिल्लाले विषय विज्ञहरुको सहयोगमा कार्यक्षेत्रगत शर्त तयार पार्ने ।
ख. कन्सल्ट्यान्ट छनौटका आधार तयार पारी प्रचलित कानून बमोजिम छनौट गर्ने ।
ग. छनौट भएको कन्सल्ट्यान्टसँग जिल्ला कार्यालयले सम्झौता गर्ने र कार्य जिम्मेवारी दिने।
घ. मस्यौदा प्रतिवेदन वुझ्ने यसको विस्तृत अध्ययन गर्ने, यसलाई प्रस्तुतिकरण गर्न लगाउने, प्रस्तुतिकरणमा सम्बन्धित स्थानीय तहका प्रमुख लगायत प्रतिनिधि, निजिक्षेत्र, साझेदार हुनसक्ने संघ संस्थालाई विशेष आमन्त्रण गर्ने । निर्देशनालय र मन्त्रालयलाई जानकारी गराउने ।
ङ. प्रस्तुतिकरणमा दिइएको सुझाबको आधारमा परिमार्जित गरिएको अन्तिम प्रतिवेदन बुझ्ने ।
च. प्रतिवेदनलाई कार्यान्वयनमा सहजिकरणको लागि निर्देशनालय, मन्त्रालय र स्थानीय तहलाइ पठाउने।

## ७.३७ प्रादेशिक लघु उद्यमी प्रर्बद्धनका लागि रणनितिक योजना निर्माण

गरिवी निवारण, स्वरोजगारको सिर्जना, स्थानीय कच्चा पदार्थको परिचालन,मागमा आधारित वस्तु तथा सेवाको उत्पादन गरी प्रदेश ५ को समृद्ध प्रदेश खुसी जनताको परिकल्पनामा सघाउ पुराउन प्रदेश स्तरिय उद्यम विकास रणनीतिक योजनाको निर्माण गरी कार्यान्वयनमा ल्याउनु यस कार्यक्रमको मूख्य उद्देश्य रहेकोछ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. कार्य क्षेत्रगत शर्त (TOR) तयार पार्ने र छलफल गरी अन्तिम रुप दिने ।
ख. यसैकार्य क्षेत्रगत शर्तको आधारमा कन्सल्ट्यान्ट छनौटका मूल्याङ्कनका आधारहरु तय गर्ने ।
ग. कन्सल्ट्यान्ट छनौट गर्ने ।
घ. छनौट भएको कन्सल्ट्यान्टसँग सम्झौता गरी कार्यजिम्मेवारी दिने ।
ङ. कन्सल्ट्यान्टको सहजिकरणको लागि जिल्लाका घरेलु कार्यालयहरुलाई पत्राचार गरी जानकारी गराउने ।



सचिव

च. मस्यौदा रणनैतिक योजना प्राप्त गर्ने र मन्त्रालयमा प्रस्तुतिकरणको व्यवस्था मिलाउने । उद्योग तथा वाणिज्यको क्षेत्रमा कार्यरत संघ संस्था तथा निजि क्षेत्रलाई उपस्थित गराउने । सुझाव दिन लगाउने र सुझावको आधारमा परिमार्जित अन्तिम रणनैतिक योजना बुझने ।

छ. यो रणनैतिक योजनालाई सबै साझेदार संघ संस्थाहरुसँग Share गर्ने र यसलाई कार्यान्वयनमा जाँदा कस कसको कस्तो कस्तो भूमिका रहन सक्दछ छलफल गर्ने ।

## ७.३८ कृषिमा आधारित आयात प्रतिस्थापन तथा निर्यात प्रबर्द्धन उद्यमहरुको सम्भाब्यता अध्ययन गर्नेः

कृषिमा आत्मनिर्भरताको लागि सम्भाब्य उद्यमहरुको पहिचान गरि कार्यान्वयनमा लैजानको लागि सम्वन्धित व्यक्ति/ संस्थाहरुसँग सूचना जानकारी आदान प्रदान गर्नु यस कार्यक्रमको उद्देश्य रहेको छ ।
यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. निर्देशनालयले गत वर्ष तयार गरिएको कार्यक्षेत्रगत शर्त (TOR )लाई अनुभवको आधारमा परिमार्जन गरी अन्तिम रुप दिने ।

ख. मूल्याङ्कनका आधार तयार गरी गत आ=व. बमोजिम जिल्ला बाहेकको लागि प्रचलित कानुन मा अध्ययन गरिएको ६. कन्सल्ट्यान्ट छनौटका लागि सूचना प्रकाशन गर्ने।

ग. सम्झौता गरी कार्य जिम्मेवारी दिने ।

घ. मस्यौदा प्रतिवेदन प्राप्त गर्ने र त्यसको विस्तृत अध्ययन गर्ने । कन्सल्ट्यान्टलाई मस्यौदा प्रतिवेदन मन्त्रालयमा प्रस्तुतिकरण गर्न लगाउने उक्त प्रस्तुतिकरणमा कृषि मन्त्रालय, निजि क्षेत्रका संघ संस्थाहरुलाई उपस्थित गराई सुझाव दिन लगाउने ।

ङ. सुझावको आधारमा परिमार्जित अन्तिम प्रतिवेदन प्राप्त गर्ने ।

च. प्रतिवेदन संवन्धित साझेदारहरु समक्ष छलफल गर्ने र कार्यान्वयनको लागि सुझाव दिन र सहकार्य गर्न सहजीकरण गर्ने ।

छ. प्रतिवेदन मन्त्रालय पठाउने र आगामी वर्षमा यसको कार्यान्वयनको लागि कार्यक्रम र बजेटको व्यवस्था गर्न सहजीकरण गर्ने ।

## ७.३९ स्थानको पहिचान गरी कपिलवस्तु, नवलपरासी तथा बर्दियामा औद्योगिक करिडोरको संम्भाब्यता अध्ययन गर्ने

उपयुक्त औद्योगिक करिडोरको सम्भाव्यता अध्ययन गरी स्थानीय कच्चा पदार्थमा आधारित उद्योग स्थापना गरी निर्यात प्रबर्द्धन र आयात प्रतिस्थापनमा सहजिकरण गरी आर्थिक कृर्याकलाप र रोजगारीको अवसरमा वृद्धि गर्नु यस कार्यक्रमको उद्देश्य रहेको छ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. औद्योगिक करिडोर विकास सम्बन्धी उद्योग, वाणिज्य तथा आपूर्ती मन्त्रालयको अवधारणा पत्रको अध्ययन गर्ने र छलफलमा जानकारी गराउने ।

ख. घरेलु तथा साना उद्योग कार्यालयहरुले सबै स्थानीय तहहरुसँग यस विषयमा छलफल गर्ने र संभाब्य स्थानको आकलन गर्ने।

ग. जिल्लामा रहेका विषय विज्ञहरुको सहजीकरणमा कार्यक्षेत्रगत शर्त तयार पार्ने ।

घ. कार्यक्षेत्रगत शर्तको आधारमा मूल्याङ्कन विधि तयार गर्ने ।
ङ. प्रचलित कानुन बमोजिम कन्सलट्याण्टको छनौट गर्ने ।
च. सम्झौता गरी कार्य जिम्मेवारी दिने ।
छ. कन्सलट्याण्टसँग ड्राफ्ट रिपोर्ट प्राप्त गर्ने अध्ययन गर्ने औद्योगिक करिडोरले समेट्न सक्ने सरोकारवालासँग छलफल गर्ने पृष्ठपोषण दिने र प्रतिवेदन परिमार्जन गर्न लगाउने ।
ज. अन्तिम प्रतिवेदन बुझ्ने र यसको कार्यान्वयनको लागि निर्देशनालय र मन्त्रालय पठाउने ।

## ७.४० खानी सम्बन्धी कानून ऐन, कार्यविधि लगायत निर्माण

प्रदेश भित्र रहेका खानी तथा खनिज पदार्थको अवस्थाबारे जानकारी प्राप्त गरि अनुसन्धान एवं उत्खनन् सम्बन्धी कार्य योजना अगाडी बढाउन मद्दत पुऱ्याउनु यस कार्यक्रमको उद्देश्य रहेको छ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. प्रदेश खानी तथा खनिज व्यवस्थापन सम्बन्धी ऐनको अधिनमा रही नियमावली तयार पार्ने र स्वीकृतिको लागि पेश गर्ने ।
ख. ऐन र नियमावलीको अधिनमा रही प्रदेश खानी कार्यक्रम सञ्चालन र व्यवस्थापनको लागि कार्यविधि बनाउने ।
ग. माथि उल्लेखित कार्य गर्दा विषय विज्ञ तथा सरोकारवालाहरुसँग राय परामर्श तथा अन्तरक्रिया कार्यक्रम चलाउने ।

उल्लिखित कार्यक्रम गर्नका लागि राय संकलन, बैठक, परामर्श सेवा, गोष्ठी, छपाइ सम्बन्धी कार्यमा विनियोजित रकम खर्च गर्न सकिनेछ ।

## ७.४१ प्रदेश नं ५ तथा खनिजहरुको बारेमा प्रकाशन मा रहेका खानी तथ्याङ्क अद्यावधिक गर्ने

खानी र खनिज पदार्थ सम्बन्धी जानकारी प्राप्त भइ सो को उपयोगिताबाट आर्थिक क्रियाकलाप सञ्चालनमा मद्दत पुऱ्याउनु यस कार्यक्रमको उद्देश्य रहेको छ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. प्रदेशमा रहेका खानी र खनिज पदार्थ सम्बन्धमा प्रचलित कानुन बमोजिम अध्ययन गरी तथ्याङ्क संकलन गर्ने ।
ख. आवश्यकता अनुसार निर्देशनालयले विज्ञ र सरोकारवालाहरुसँग छलफल र अन्तरकृया चलाउने
ग. तथ्याङ्कको विश्लेषण गर्ने अन्तरकृया छलफलबाट निश्कर्ष निकाल्ने ।
घ. निष्कर्षको आधारमा प्रतिवेदन तयारपारी प्रकाशन गर्ने ।
ङ. यस्तो कृर्याकलाप सञ्चालन गर्दा मन्त्रालयबाट राय सुझाव लिने व्यवस्था मिलाउने ।

## ७.४२ प्रदेश नं . ५ मा रहेका चुन ढुङ्गा खानीहरुको उत्खनन अनुगमन तथा निरिक्षण गरी प्रतिवेदन तयार गर्ने

प्रदेश नं. ५ मा संचालित चुन ढुङ्गा खानीहरुको उत्खनन कार्यमा सहजीकरण गर्नु यस कार्यक्रमको उद्देश्य रहेको छ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. उद्योग, वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालयले प्रदेश नंमा संचालित चुन ढुङ्गा खानीहरुको ५ . उत्खनन कार्यको अनुगमन तथा निरिक्षण गर्ने ।
ख. विधि विधान अनुसार संचालनमा नरहेका खानीहरुलाई नियमानुसारको सचेत गराउने वा कारवाही गर्ने वा कारवाहीको लागि सिफारिश गर्ने ।
ग. एक पटक अनुगमन गर्दा भेटिएका कमि कमजोरी हटाउनको लागि अनुगमन टोलीले दिएको सुझाव कार्यान्वयन भए नभएको बुझ्नको लागि पुनः सोही खानीहरुको निरिक्षण गर्ने।
घ. समय समयमा वा कसैको गुनासोको आधारमा पटके अनुगमन गर्ने ।
ङ. रोयल्टी उठे नउठेको बारेमा अनुगमन गरी नियमन गर्ने ।
च. निर्देशनालयले गरेको अनुगमनको प्रतिवेदन आफ्नो सुझाव सहित मन्त्रालयलाई पठाउने ।
छ. आवश्यकता भएमा निर्देशनालयले पेश गरेको प्रतिवेदनको आधारमा मन्त्रालयले पनि चुन ढुङ्गा खानीहरुको उत्खनन कार्यको अनुगमन गर्ने ।

## ७.४३ खानी तथा खनिज सम्वन्धि अनुगमन तथा निरीक्षण

प्रदेश नं. ५ मा संचालित खानी तथा खनिज पदार्थहरु संग सम्वन्धित उद्योगहरुको संचालनमा सहजीकरण गर्नु यस कार्यक्रमको उद्देश्य रहेको छ ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. उद्योग, वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालय र मन्त्रालयले प्रदेश नं. ५ मा रहेका खानी तथा खनिज पदार्थहरुसंग सम्वन्धित उद्योगहरुको अनुगमन तथा निरीक्षण गर्ने ।
ख. विधि विधान अनुसार संचालनमा नरहेका खानी तथा खनिज पदार्थहरु संग सम्वन्धित उद्योगहरु नियमानुसारको सचेत गराउने वा कारवाही गर्ने वा कारवाहीको लागि सिफारिश गर्ने ।
ग. एक पटक अनुगमन गर्दा भेटिएका कमि कमजोरी हटाउनको लागि अनुगमन टोलीले दिएको सुझाव कार्यान्वयन भए नभएको वुझ्नको लागि पुनः सोही खानी तथा खनिज पदार्थहरु संग सम्वन्धित उद्योगहरुको निरिक्षण गर्ने।
घ. समय समयमा वा कसैको गुनासोको आधारमा पटके अनुगमन गर्ने ।
ङ. निर्देशनालयले गरेको अनुगमनको प्रतिवेदन आफ्नो सुझाव सहित मन्त्रालयलाई पठाउने ।
च. मन्त्रालयले खानी तथा खनिज पदार्थहरु संग सम्वन्धित उद्योगहरुको अनुगमनमा देखिएका विषयवस्तुहरुमा आफ्नो सुझाव सहितको प्रतिवेदन मुख्य मन्त्रीको कार्यालयमा जानकारी र आवश्यक सहजीकरणको लागि पेश गर्ने ।

## ७.४४ खानी तथा खनिज पदार्थ सम्वन्धि विस्तृत अध्ययन (ढुङ्गा, स्लेट खानी, चुनढुङ्गा)

खानी तथा खनिज पदार्थको अवस्थिती तथा सम्भावनाको बारेमा विस्तृत जानकारी प्राप्त गरी उपयोगको वातावरण निर्माणमा आवश्यक सहजीकरण गर्नु यस कार्यक्रमको उद्देश्य रहेको छ।

यो कार्यक्रममा निम्न क्रियाकलापहरु गरिनेछ।

क. खानी तथा खनिज पदार्थ संग सम्वन्धित विषय विज्ञहरुको सहजिकरणमा कार्यक्षेत्र गत शर्त तयार पार्ने ।
ख. कार्यक्षेत्रगत शर्तको आधारमा मूल्याङ्कन विधि तयार गर्ने ।
ग. कार्यक्षेत्रगत शर्तको आधारमा सूचना प्रकाशन गर्ने ।
घ. कन्सल्ट्यान्टको छनौट गर्ने ।
ङ. सम्झौता गरी कार्य जिम्मेवारी दिने ।
च. ड्राफ्ट रिपोर्ट प्राप्त गर्ने अध्ययन गर्ने सम्वन्धित स्थानीय तहहरुसँग छलफल गर्ने, पृष्ठपोषण दिने र प्रतिवेदन परिमार्जन गर्न लगाउने ।
छ. अन्तिम प्रतिवेदन बुझ्ने र यसको कार्यान्वयनको लागि मन्त्रालय पठाउने ।

## ७.४५ कार्यविधिमा उल्लेखित कार्यक्रमहरुको खर्चको सम्वन्धमा

यस कार्यविधिमा उल्लेख भएका सीप तालिम सम्बन्धि कार्यक्रम सञ्चालन गर्दा कार्यक्रममा छुट्टाइएको रकम तपशिलका शीर्षकमा खर्च गर्न सकिनेछ ।

क. सहभागीहरूहरुको खाजा खर्च ।
ख. स्टेशनरी तथा तालिम सामग्री ।
ग. प्रशिक्षक पारिश्रमिक ।
घ. कार्यक्रम उद्घाटन / समापन
ङ. तालिम अवधि र तालिम पश्चातको अनुगमन ।
च. यातायात/ इन्धन व्यवस्थापन ।
छ. हल भाडा ।
ज. संयोजक तथा सहयोगि भत्ता ।
झ. सहभागि छनौट लगायत खर्च।

उपरोक्त बाहेक अन्य कार्यक्रम सञ्चालन गर्दा कार्यक्रममा छुट्टाइएको रकम तपशिलका शिर्षकमा खर्च गर्न सकिनेछ ।

क. विषय वस्तुको विवरण सम्बन्धी तथ्याङ्क संकलन गर्ने कार्य ।
ख. विषयवस्तुको पहिचान र विश्लेषण गर्ने कार्य गर्दा मिटिङ, सेमिनार र गोष्ठी सम्बन्धी कार्य ।
ग. कार्यक्रम सञ्चालन गर्ने क्रममा सहभागि भत्ता व्यवस्था तथा प्रशिक्षकलाई छोटो/ लामो अवधिमा सेवा, करार, सम्झौता, अनुगमन तथा भ्रमण खर्चको व्यवस्था ।
घ. प्रविधि हस्तान्तरणमा साधनको पहिचान नियमानुसार खरिद तथा हस्तान्तरण र सञ्चालन सम्बन्धी शीप वृद्धिको प्रशिक्षणको व्यवस्था गर्दा हुने खर्च ।
ङ. माथि उल्लेख भएको विषय अतिरिक्त अन्य कार्यक्रम सँग सम्बन्धित विषय जस्तै कार्यक्षेत्रगत शर्त तयार, कार्यविधि बनाउने, समिक्षा गर्ने प्रतिवेदन तयार पार्ने जस्ता कार्यहरु ।

सचिव

# परिच्छेद ८

# वातावरण तथा जलवायु अनुकुलन कार्यक्रम (३०७०००१९)

## ८.१ प्रादेशिक वातावरण संरक्षण ऐन, नियम तथा निर्देशिका तयारी

सघिंय वातावरण सम्बन्धित कानूनहरु प्रदेशको वातावरण अनुकूल बनाउन यस कार्यक्रमका मूख्य उद्देश्य रहेको छ । मूख्य उद्देश्यहरु हासिल गर्न निम्नअनुसार खण्डीकरण गरिएका छन ।

क. प्रादेशिक वातावरणीय प्रदुषण नियन्त्रण कार्यविधी ऐन २०७६ निर्माण
ख. प्रादेशिक वातावरणीय प्रभाव व्यवस्थापन कार्यविधी ऐन २०७६ निर्माण
ग. प्रादेशिक वातावरणीय निरिक्षण कार्यविधी निर्देशिका निर्माण

उल्लेखित ३ वटै उद्देश्य प्राप्तीको लागी सबैभन्दा पहिले ३ वटै कानूनको मस्यौदा बनाइ सो मस्यौदामा प्रदेशमै विज्ञ तथा सरोकार छलफल गरी राय सुझाव लिइ मस्यौदामा समावेश गरी अन्तिम रुप दिइनेछ । मस्यौदाको अन्तिम रुप नियम अनुसार पारित गराइ गोष्ठी मार्फत सार्वनिकीकरण गरिनेछ । चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।

क. मन्त्रालय र बाह्य विज्ञ समेतको मस्यौदा निर्माण कार्यटोली गठन
ख. मस्यौदा निर्माण तथा सरोकारवालाहरुसंग छलफल
ग. मस्यौदा पारित तथा सार्वजनिकीकरण
घ. प्रकाशन

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गर्न सकिनेछ ।

क. बैठक एवं यातायात भत्ता र दैनिक भत्ता
ख. खाना तथा खाजा
ग. गोष्ठी तथा बैठक कार्यः हल, विद्दुत, विद्युतिय उपकरण, स्टेशनरी
घ. प्रकाशनः डिजाइन तथा छपाइ

## ८.२ IEE स्वकृति संयत्र निर्माण तथा कायार्न्वयन

प्रदेशमा स्तरमा गर्नुपर्ने प्रारम्भिक वातावरणीय परिक्षण प्रभाव (IEE) स्विकृत गर्ने प्रकृया स्थपित गर्न यस कार्यक्रमको मूख्य उद्देश्य रहेको छ । सहायक उद्देश्यहरु निम्नअनुसार रहेका छन ।

क. प्रादेशिक वातावरणीय प्रभाव अध्ययन (IEE) स्विकृती प्रकृया कार्यविधी निर्माण
ख. कार्यविधी अनुसारको संरचना तथा प्रकृयाको अवलम्बन

उल्लेखित उद्देश्यहरु प्राप्तीको लागी सबैभन्दा पहिले सम्बन्धित मस्यौदा बनाइ सो मस्यौदा प्रदेशमै विज्ञ तथा सरोकारवालासँग छलफल गरी राय सुझाव लिइ मस्यौदामा समावेश गरी अन्तिम रुप दिइनेछ । यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।

सचिव

क. मस्यौदा निर्माण कार्यटोली गठन
ख. मस्यौदा निर्माण तथा सरोकारवालाहरुसंग छलफल
ग. मस्यौदा मन्त्रीस्तरीय स्विकृती
घ. प्रकाशन

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गर्न सकिनेछ ।

क. बैठक एवं यातायात भत्ता र दैनिक भत्ता
ख. खाना तथा खाजा
ग. गोष्ठी तथा बैठक कार्यः हल, विद्युत, विद्युतिय उपकरण, स्टेशनरी
घ. प्रकाशनः डिजाइन तथा छपाइ

## ८.३ IEE/EIA सम्बन्धी उद्योग/संस्था निरिक्षण अनुगमन

प्रदेशमा स्तरमा रहेका प्रस्ताव/उद्योग/संस्थानहरुको कार्यान्वयन/संचालनबाट भइरहेको वातावरणीय प्रदुषण तथा प्रभावहरुको निरिक्षण तथा अनुगमन गरी प्रदुषणको रोकथाम तथा व्यवस्थापन गरी प्रदेशको वातावरणीय स्थितीको संरक्षण तथा प्रवर्द्धन गर्ने मूख्य उद्देश्य रहेको छ । यस वर्षलाइ ३० वटा प्रस्ताव/उद्योग/संस्थानहरुको प्रदुषण तथा प्रभावहरुको निरिक्षण गरिनेछ ।

यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।

क. वातावरण निरिक्षकको नेतृत्वमा निरिक्षण टोली गठन
ख. प्रस्ताव/उद्योग/संस्थाहरुको वातावरणीय निरिक्षण
ग. निरिक्षण प्रतिवेदन
घ. नियमानुसार आवाश्यक कारवाही

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गर्न सकिनेछ ।

क. यातायात भत्ता र दैनिक भत्ता (आवश्यक परेमा इन्धन, बैठक वा यातायात भत्ता, खाजा, स्टेशनरी)
ख. निरिक्षण प्रभावकारिताको लागी आवाश्यक पर्ने फिल्ड सामाग्री खरीद
ग. प्रतिवेदन लेखन तथा छपाइ

## ८.४ वातावरण संरक्षण तथा जैविक विविधता सम्बन्धी कार्यशाला गोष्ठी

प्रदेशमा स्तरमा वातावरणीय प्रदुषण र प्रभावहरु प्रती जनचेतना फैलाउन र प्रदेशका बासिन्दाहरुमा प्रदुषण प्रभाव प्रति सजग रहने सचेतना फैलाउन यस कार्यक्रमको प्रदेशमा वातावरणीय स्थितीको संरक्षण तथा प्रवर्द्धन गर्ने मूख्य उद्देश्य रहेको छ । यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।

क. उद्देश्य अनुरुप प्रस्तुतिकरण तयार गर्ने
ख. स्थानिय एवं जिल्ला स्तरमा सचेतनामूलक कार्यशाला गोष्ठी संचालन गर्ने



सचिव

ग. गोष्ठी प्रतिवेदन

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गर्न सकिनेछ ।

क. यातायात भत्ता र दैनिक भत्ता
ख. इन्धन
ग. गोष्ठीमा यातायात भत्ता, खाजा, स्टेशनरी
घ. हल भाडा, विद्युत, उपकरण शुल्क
ङ. प्रतिवेदन लेखन तथा छपाइ

## ८.५ निरिक्षण अनुगमन उपकरण खरिद (Gas analyser, water quality analyser, sound and vibration analyser)

प्रदेशमा स्तरमा वातावरणीय प्रदुषण र प्रभावहरुको वैज्ञानिक र प्रमाणमा आधारित निरिक्षण अनुगमन गर्नको लागी अवाश्यक उपकरण खरिद गर्ने उद्देश्य रहेको छ ।

क. Gas analyzer २ सेट (चिम्नी र सवारी साधन धुवाँ मापन)
ख. Water quality analyzer १ सेट
ग. Sound and vibration analyzer १ सेट

यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ । उपकरणहरुको प्रकृति एवं विशेषता अनुसार Gas analyzer र sound and vibration analyzer एक पटक र water quality analyzer अर्को पटक गरी २ चरणमा खरीद गरिनेछ । प्रत्येक चरणमा निम्न कार्यहरु गरिनेछ ।

क. विशेषज्ञबाट उपकरणहरुको स्पेसिफिकेशन निर्माण
ख. कोटेशन सकंलन
ग. खरीद

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गर्न सकिनेछ ।

क. बैठक भत्ता, खाजा
ख. पारिश्रमिक ( स्पेशिफिकेशन निर्माणमा)
ग. खरीद तथा ढुवानी खर्च
घ. आवाश्यक तालिम दैनिक भत्ता, यातायात खर्च

## ८.६ वातावरणीय स्थिती तथा प्रदुषण वितरण अध्ययन (वायु, जल, ध्वनी, माटो)

प्रदेशमा स्तरमा वातावरणीय प्रदुषण र प्रभावहरुको पहिचान तथा अवस्थाको तथ्य एवं जानकारी स्थापित गरी वातावरणीय आधाररेखा (baseline) को चित्रण गर्नु यस कार्यक्रमको मूख्य उद्देश्य रहेको छ । यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।



सचिव

क. परामर्शदाता छनौट
ख. अध्ययन उपलब्धी तथा प्रगती कार्यशाला गोष्ठी (२ पटक सम्म)
ग. गोष्ठी प्रतिवेदन तथा सार्वजनिकीकरण
घ. प्रकाशन

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गरिनेछ ।

क. परामर्शदाताको स्विकुत लागत अनुमान
ख. गोष्ठीमा यातायात भत्ता, खाजा, स्टेशनरी
ग. हल भाडा, विद्दुत, उपकरण शुल्क
घ. डिजाइन तथा प्रकाशन

## ८.७ प्रदेश ५ शून्य विषादी सम्भाव्यता अध्ययन तथा कार्ययोजना निर्माण

यस कार्यक्रमको उद्देश्य प्रदेश नं ५ लाई रसायनिक विषादी मुक्त बनाउन चाहिने आधारहरुको सम्भाव्यता अध्ययन गर्नु रहेको छ । यस कार्यक्रममा निम्न बमोजिमका कार्यहरु गरिने छ ।

क. प्रदेशमा रसायनिक विषादीहरुको प्रयोग तथा प्रभावहरुको अध्ययन
ख. प्रदेशमा जैविक विषादीहरुको उपलब्धता तथ प्रयोग सम्भावना अध्ययन
ग. प्रदेशलाइ रसायनिक विषादी मुक्त बनाउन आवाश्यक पर्ने संस्थागत संरचना तथा प्रतिबद्धताको अनुमान
घ. रसायनिक विषादी मुक्त प्रदेश नं ५ घोषणा गर्न कार्ययोजना निर्माण

यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।
क. परामर्शदाता छनौट
ख. अध्ययन उपलब्धी तथा प्रगती कार्यशाला गोष्ठी (२ पटक सम्म)
ग. कार्ययोजना सहितको प्रतिवेदन तथा सार्वजनिकीकरण
घ. प्रकाशन

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गरिनेछ ।

क. परामर्शदाताको स्विकृत लागत अनुमान
ख. गोष्ठीमा यातायात भत्ता, खाजा, स्टेशनरी
ग. हल भाडा, विद्दुत, उपकरण शुल्क
घ. डिजाइन तथा प्रकाशन

## ८.८ मदाने संरक्षित वन क्षेत्रमा रहेका दुर्लभ वनस्पतिहरूको अध्ययन

यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।
क. परामर्शदाता छनौट

ख. अध्ययन उपलब्धी तथा प्रगती कार्यशाला गोष्ठी (२ पटक सम्म)
ग. कार्य योजना सहितको प्रतिवेदन सार्वजनिकीकरण
घ. प्रकाशन

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गर्न सकिनेछ ।

क. परामर्शदाताको स्विकृत लागत अनुमान
ख. गोष्ठीमा यातायात भत्ता, खाजा, स्टेशनरी
ग. हल भाडा, विद्युत, उपकरण शुल्क
घ. डिजाइन तथा प्रकाशन

## ८.९ जगदिशपुर जलाशय तथा आसपास क्षेत्रका वनस्पतिहरूको अभिलेखिकरण

यस कार्यक्रममा चरणबद्ध तरीकाले निम्न बमोजिम कार्यहरु गरिनेछ ।

क. परामर्शदाता छनौट
ख. अध्ययन उपलब्धी तथा प्रगती कार्यशाला गोष्ठी (२ पटक सम्म)
ग. कार्य योजना सहितको प्रतिवेदन सार्वजनिकीकरण

यस कार्यक्रमको लागी निम्न शिर्षकहरुमा प्रचिलत नियमानुसार खर्च गरिनेछ ।

क. परामर्शदाताको स्विकृत लागत अनुमान
ख. गोष्ठीमा यातायात भत्ता, खाजा, स्टेशनरी
ग. हल भाडा, विद्युत, उपकरण शुल्क
घ. डिजाइन तथा प्रकाशन

सचिव